राजनैतिक

# शब्द परिचय


संकलन

गोपीरमण उपाध्याय



प्रकाशक

बालकृष्ण चापागाईं

१८

राजनैतिक

# शब्द परिचय




– गोपीरमण उपाध्याय

प्रकाशक:– बालकृष्ण चापागाई

मूल्य रु० १२/-

मुद्रक:– राष्ट्रिय छापाखाना,

अमरपथ, बुटवल-८

# प्रकाशकीय

यो राजनैतिक शब्द परिचय श्री गोपीरमण उपाध्यायले वर्तमान अवस्थामा देशमा पटक पटक प्रयोगमा आउने शब्दहरू सर्वसाधारण देखि लिएर सचेत पाठकहरूको लागि समेत खाँचोको महसूस गरी विभिन्न ग्रन्थहरु को अध्ययनबाट तयार पार्नु भएको हो। यसको प्रथम प्रकाशन २०३८ साल मा भएको थियो, त्यति बेला तत्कालिन सि० डि० ओ० आत्माराम पौडेल ले प्रकाशित २००० हजार प्रति नै जफत गरेको ले बजारमा बिक्री बितरण हुन पाएन ता पनि एक दुई प्रति प्रेसमा बाँकी रहेका प्रतिहरु बाट फोटो कपी समेत गरी पाठकहरुले पढ्ने काम गरेका थिए; यसै बीच पूर्वतिरको सामना प्रकाशनले प्रकाशित गरी छिटफुट रूपमा बिक्री बितरण गरेको पाइयो; ता पनि सबै पाठकहरूका हातमा पुग्न सकेन।

राजनीतिमा जिज्ञाशा राख्ने विभिन्न क्षेत्रबाट यस पुस्तकको निकै खाँचो महसूस गरिएको र पटक पटक प्रकाशनमा जोड दिइएकोले यस "राजनैतिक शब्द परिचय"को तेस्रो संस्करण प्रकाशित गरिएको छ। निश्चय नै केही हद सम्म भए पनि यस पुस्तकले राजनीतिक क्षेत्रमा प्रयोगमा ल्याइने विभिन्न शब्दहरूको ज्ञानका लागि सहयोग मिल्ने नै छ। पाठकहरुबाट रचनात्मक सुझावको आशा राखेका छौं; ती सुझावहरूका आधारमा आगामी संस्करण-हरूमा परिमार्जित गर्दै जाने कुरा समेत जानकारी गराउँछौं।

बालकृष्ण चापागाई

# राजनैतिक शब्द परिचय बारे

राजनीति ठूला बडाहरूले एकलौटे बनाउने जमाना गयो। अहिले शहरका होटलमा काम गर्ने बेराबाट लिएर लेखतिर दाउरा घाँस गर्ने गोठालाहरूले समेत राजनीतिमा उत्तिकै अभिरुचि राखेका हुन्छन् जत्तिको अभिरूचि कुनै राजनैतिक कार्यकर्ताले राख्दछ। देशको अशिक्षाले गर्दा राजनीतिका धेरै कुरा बुझ्न भरिया, गोठाला, मजदूर र किसानहरूलाई ठूलो कठिनाइ पर्ने गर्छ। खास समस्या उनीहरूलाई भाषाको पर्दछ। भाषामा पनि शब्दको समस्या पर्दछ। एक त कतिपय शब्द खास दार्शनिक, सैद्धान्तिक अथवा राजनैतिक अर्थमा प्रयोग हुने हुनाले त्यसको अर्थ राजनीतिमा चासो राख्ने सबै पाठकले बुझ्नु पर्ने हुन्छ। त्यसमा पनि समय समयमा एउटै शब्द पनि भिन्दै अर्थमा प्रयोग हुने अथवा बुझिन थालिने र फेरि राजनैतिक आन्दोलनको सिलसिलमा नयाँ नयाँ शब्द उत्पन्न हुंदै जाने हुनाले तिनीहरूको पनि अर्थ राजनतिमा चासो राख्ने अथवा सरिक हुनेले बुझ्दै जानु पर्ने हुन्छ। कहिले काँही सही राजनीति समातेका सर्व साधारण जनतालाई विरोधी राजनीति गर्नेहरूले शब्दाडम्बर द्वारा मूर्ख वनाउने अथवा हतोत्साहित गर्ने दुस्साहस गर्दछन्। यसको निम्ति पनि चलन चल्तीमा आइरहेका राजनैतिक शब्दहरू विश्वविद्यालयमा पढ्ने विद्यार्थीबाट लिएर हलो जोत्ने हलीले सम्म बुझ्नु पर्ने हुन्छ। राजनीति बुझ्ने अथवा अध्ययन गर्ने क्रममा कुनै शब्द नबुझी दाँतमा ढुङ्गा लागे झैं नलागोस् भन्नाको निम्ति सबै प्रचलित शब्दको ज्ञान हुन आवश्यक भएको छ। राजनीतिको भाषामा बार बार प्रयोग हुने शब्दको अर्थ त झनै सबैले तुरुन्त बुझ्नु पर्ने हुन्छ। एउटा शब्द नबुझे सम्पूर्ण पाठको बोध पनि अधकच्लो भएको हुन सक्छ। मजदूर किसानको बीचमा राजनैतिक कुरा हुंदा 'साम्राज्यवाद' 'प्रभुत्ववाद,' 'नोकरशाही,' 'अर्ध सामन्ती,' 'अर्ध औपनिवेशिक' द्वन्द्वात्मक' 'मात्रात्मक;' गुणात्मक,' अतिरिक्त मूल्य' जनबादी केन्द्रियता 'बामपन्थी' 'दक्षिण पन्थी' आदि जस्ता अनेकौं शब्द घरि घरि प्रयोग गरिन्छन्। यदि

यिनीहरूको अर्थ बोध सर्व साधारण जनतामा गराइनन् भने उनीहरूले कुनै राजनीति कार्यकर्ताले अथवा व्यक्तिले बुझाएको कुरा ५ प्रतिशत पनि बुझ्न सक्ने छैनन् । कुनै कुनै व्यक्ति यस्ता शब्द प्रयोग गरेमा यसले निकै राजनीति जानेको रहेछ भनी ट्वाल्ल परेर भने अवश्य हेर्ने छन् । त्यति मात्र होइन, राजनीतिमा प्रयोग गरिने कैयौं शब्दहरू अरू त अरू विश्वविद्यालयमा पढाउने प्राध्यापकहरूलाई पनि थाहा भएको पाईदैन ।

यस परिप्रेक्ष्यमा साथी गोपीरमण उपाध्यायले राजनैतिक शब्द संकलन गरेर तिनीहरूको सान्दर्भिक अर्थ सजिलो भाषामा बुझाउने जुन जमर्को गर्नु भएको छ, यसले हाम्रो सबै शब्द समस्या हल गरेको छ त भन्न सकिन्न, तर केही हदसम्म हाम्रो खाँचो भने अवश्य टारेको छ ।

निश्चय पनि यसबाट राजनीतिमा चासो राख्ने धेरै जनता लाभावन्वित हुने छन् । उहाँले अझ धेरै खाँचो पूरा गर्ने दिशामा निरन्तर लागिराखेर अरू थप शब्द जम्मा गरी यसका पछि पछिका संस्करणलाई अझ समृद्ध पार्नु हुने भन्ने आशा राख्न सकिन्छ । यो तेस्रो संस्करण भएको हुँदा यसको बढ्दो माग र उपयोगितालाई सजिलै बुझ्न सकिन्छ ।

– दिल साहनी

# राजनैतिक शब्द-परिचय

"अ"

१. अधिकार :–

शान्त, स्वाधीन सामाजिक जीवन बिताउन प्रयोग गर्न पाउनु पर्ने स्वतन्त्रता लाई अधिकार भनिन्छ।

२. अनुशासन :–

कुनै पनि कार्य सम्पन्न गर्न पालन गर्नु पर्ने मर्यादाका नियम या आचार संहितालाई अनुशासन भनिन्छ।

३. अनुभववाद :–

वस्तुगत तर्क र बौद्धिक कसौटी भन्दा स्वतन्त्र मानिसका सम्वेदनात्मक अनुभवहरू नै ज्ञानका मूल आधार हुन् भन्ने सिद्धान्त। अर्को अर्थमा आफूले व्यवहारमा झुठो साँचो जे कुरा बुझ्यो या अधुरा ढङ्गले जे बुझ्यो, जे अनुभव गऱ्यो त्यही सीमित ज्ञान या अधकल्चो अनुभव पूर्ण सत्य मान्नु आफ्ना व्यावहारिक कमजोरीलाई वास्ता नगरी एक तर्फी वकालत गर्नु अनुभववाद हो। उदाहरणका लागि पुरानो संशोधनवादी लाईन लिएर जनताका बीच केही समय काम गरेका कार्यकर्ताले पछि आफू असफल भएपछि आफू गलत लाईन लिएर असफल भएको तथ्य लाई छिपाएर 'नेपाली जनतामा क्रान्ति गर्ने खुबी छैन, नेपालमा क्रान्ति हुनै सक्दैन' भन्ने जस्ता गलत निष्कर्ष निकाल्नु र त्यसलाई 'यो हामीले भोगेको अनुभव हो' भन्दै डुग्गी पिट्नु एक छाँटको अनुभव-वाद हो।

४. अन्तर्वस्तु र आकृति :–

द्वन्दात्मक भौतिकवादका ७ वटा परिकल्पना मध्येको यो एउटा परिकल्पना हो। कुनै वस्तु या घटनामा दुई पक्ष रहन्छन्। एउटा भित्रीतत्व अर्को त्यसको बाहिरी क्रियाकलाप। जस्तो कि कुनै व्यवस्थाको बाहिर देखाउनेरूप र त्यसको भित्रीबनोट छुट्टै हुन्छ। प्रकृति विज्ञानमा सूर्य एउटा अति उज्वल ग्रह हो। यो यसको आकृति भयो। हिलीयम र हाईड्रोजन ग्यास यसको अन्तर्ववस्तु हो। समाज विज्ञानमा उत्पादन सम्बन्ध आकृति हो भने उत्पादक शक्ति

यसका अन्तर्वस्तु हुन् । राजनीतिमा राज्य व्यवस्था बाहिरी रूप हो भने त्यस अन्तर्गत क्रियाशील वर्ग समुदाय अन्तर्वस्तु हुन् ।

### ५. अन्तर्विरोध :–

वस्तु भित्र रहेका र विपरीत तत्वका एकता र अन्तर्क्रियालाई अन्तर्विरोध भनिन्छ । यो सार्वभौमिक हुन्छ । प्रत्येक वस्तुमा हुने अन्तर्विरोधका रूप हरू भिन्दा भिन्दै हुन्छन् । जस्तै गणित शास्त्र धनात्मक र ऋणात्मक, विज्ञानमा क्रिया, प्रतिक्रिया, समाजमा शोषक र शोषित वर्ग ईत्यादि ।

### ६. अध्यात्मवाद :–

ईश्वर या कुनै महान चेतनाले नै सारा ब्रह्माण्डको सृष्टि गर्छ, पालन पोषण र सञ्चालन गर्छ अन्तमा संहार गर्छ; उसको इच्छा विना कहीं केही हुन सक्दैन भन्ने सिद्धान्तलाई अध्यात्मवाद भनिन्छ । छोटकरीमा भन्दा आत्मा या ईश्वरमा आधारित सिद्धान्तलाई अध्यात्मवाद भनिन्छ । अर्थात यस वादले (क) ईश्वर (चेतना) लाई प्रमुख, प्रथम अनन्त र अविनाशी तत्व मान्दछ र भौतिक पदार्थलाई गौण, अस्थायी र नाशवान ठान्दछ । (ख) चेतनाबाट पदार्थ सिर्जना हुन्छ भन्दछ । (ग) मानवको बुद्धिबल ले भौतिक जगत र यसका नियम बुझ्न सकिदैन भन्दछ । (घ) गुणात्मक विकासलाई इन्कार्दै मात्राको विकास मात्र मान्दछ । सबै धर्मशास्त्र अध्यात्मवादी हुन्छन् । अध्यात्मवाद वा ईश्वर मान्नेलाई आस्तिक भन्दछन् । प्राय: सबै अध्यात्मवादीहरू कुनै न कुनै रूपमा पुर्वजन्म, पुनर्जन्म, इहलोक, परलोक, स्वर्ग, नरक, भाग्यवाद र वर्ग विभेद आदि कुरामा विश्वास मान्दछन् । खास अर्थमा अध्यात्मवादलाई आदर्शवाद या भाववाद पनि भनिन्छ ।

### ७. अर्ध सर्वहारा :-

अर्धमोही किसान, गरीब किसान, साना दस्तकार, पसलकार, कामदार, साना खुद्रा पसलेहरू, कृषि मजदूर आदिको वर्गलाई अर्ध सर्वहारा वर्ग भनिन्छ । यिनीहरूले ज्याला कम पाउँछन् र वर्षेनि ऋणमा डुब्दै गई रहेका हुन्छन् । प्रशस्त संख्या भएको यो वर्ग आर्थिक र राजनैतिक थिचोमिचोको कारणले क्रान्तिमा सरीक हुन्छन् ।

### ८. अन्धराष्ट्रवाद :—

यो राष्ट्रिय अभिमान हो अरू राष्ट्र भन्दा आफ्नो राष्ट्रलाई श्रेष्ठ ठान्ने अरू राष्ट्रको हितलाई मिचेर पनि आफ्नै राष्ट्रको हित गर्नु पर्छ भन्ने भावना र बिचारलाई 'अन्ध राष्ट्रवाद' भनिन्छ । खास गरी द्वितीय

विश्व युद्धका समयमा संसारका सबै राष्ट्रमा जर्मनी राष्ट्र नै सर्वश्रेष्ठ हो र सबै राष्ट्रले जर्मनीको प्रभुत्व स्वीकार गर्नु पर्छ भन्ने हिटलरको राष्ट्रवाद अन्ध राष्ट्रवाद हो ।

## ९, अवसरवाद :—

कुनै नीति, सिद्धान्त आदिलाई न अंगाली जताबाट आफ्नो स्वार्थ पूर्ति हुन्छ, त्यतै दगुर्ने मौकावाद ( ताक परे तिवारी नत्र गोता मे ) लाई अवसरवाद भनिन्छ ।

## १०. अन्ध विश्वास:—

कुनै पनि कुरालाई राम्ररी सोचबुझ नगरी, जाँच पड्ताल नगरी आँखा चिम्लेर विश्वास गर्नु, विज्ञान विरोधी र धर्मले फिंजाएका झुट्टा कुराहरूमा विश्वास गर्नु अन्ध विश्वास हो ।

## ११. अराजकतावाद :—

कुनै पनि राज्य व्यवस्था पार्टी, संस्था, आदिमा तिनी भित्रका वर्ग वा सदस्यहरूले आपनो निकायलाइ अघि बढाउन या सफल बनाउनकालागि नीति कानून, लाइन, योजना, सङ्गठन, नियम, अनुशासन र राम्रो तयारी बिना मनमानी ढङ्गले भद्रगोल पाराले जथाभावी काम गर्नु अराजकता हो । यसबाट होडलो, फुट, र लथालिङ्ग परिस्थिति पैदा हुन्छ । सामूहिकता टुट्छ, बिगार्ने, भत्काउने काम मात्र हुन्छ, नीति र कार्यमा केन्द्रीयता हुन्न, यसैलाई अराजकतावाद भनिन्छ ।

## १२. अधिनायकत्व:—

राज्यसत्ताको वा कुनै पार्टीको बागडोर समाउने नेतृत्वलाई अधिनायकत्व भनिन्छ । अधिनायकत्वलाई तानाशाही वा हुकुमत पनि भनिन्छ । नयाँ जनवादी व्यवस्थामा मजदूर, किसान, राष्ट्रिय पूंजीपति र जनताका अरू क्रान्तिकारी वर्गहरूको संयुक्त अधिनायकत्व हुन्छ । रूस, चीनमा अहिले समाजवादी व्यवस्था हुनाले जनताको जनवादी (समाजवादी) अधिनायकत्व छ ।

## १३. अतिजनवाद:—

देशकाल परिस्थिति नसुहाउँदो र अनुशासनदेखि बाहिरको असीमित अनियन्त्रित र अराजकतावादी ढङ्गको जनवादी अधिकार खोज्नुलाई अतिजनवाद भनिन्छ ।

## १४. अर्ध उपनिवेश:–

साम्राज्यवादी तथा विस्तारवादी देशहरूले अर्को देशको आर्थिक क्षेत्रमा संयुक्त आर्थिक कारोवार अर्थात 'संयुक्त पूंजी लगानी' आदि निहुंले देशको प्राकृतिक सम्पत्ति (कच्चा माल) हरू लुटेर आफ्ना दलालहरूद्वारा देशको राष्ट्रिय उद्योग-धन्दामा हस्तक्षेप गराएर वा विकास हुन नदिएर विदेशी ऋणमा डुबाएर, सामान्य दैनिक उपभोगका सामानहरूमा पनि अर्काकै मुख ताक्ने बनाएर, साँस्कृतिक क्षेत्रमा साम्राज्यवादी विकृति संस्कृति, गन्दा साहित्य, अश्लील शिल्प, हिप्पी, आदिको प्रचार प्रसारद्वारा, राजनैतिक रूपमा देशको सत्ताले स्वतन्त्र रूपमा विदेश नीति तय गर्न नसक्ने बनाएर र सामाजिक रूपमा सामुदायिक दङ्गा जातिभेद, वर्णभेद आदिको विद्रोह गराएर कायम गर्दै जाने व्यवस्थाद्वारा उत्पन्न सामाजिक स्थितिलाई अर्ध उपनिवेश भनिन्छ । संक्षेपमा स्पष्ट गर्दा, राजनैतिक दृष्टिले स्वतन्त्र जस्तो तर उद्योग, व्यापार, शिक्षा संस्कृति जस्ता विषयमा साम्राज्यवादी मुलुकहरूद्वारा भित्री चंगुलमा फँसेका र आफ्नो स्वतन्त्र राष्ट्रिय अर्थतन्त्र नभएका देशलाई अर्ध उपनिवेश भनिन्छ । साम्राज्यवादले नव-उपनिवेश नीति अपनाइरहेको आधुनिक युगमा जहाँ जहाँ नव उपनिवेशवादी नीति लागु भएको छ ती सबै देशको स्थिति अर्ध उपनिवेशी हुन्छ र यस्ता देशहरू आधा स्वतन्त्र र आधा परतन्त्र हुन्छन् । भारत नै हेरौं–वाहिर स्वतन्त्र देखिए पनि त्यहाँको अर्थतन्त्रको लगाम रूसी–अमेरिकीका हातमा छ ।

## १५. अर्ध सामन्ती:–

जुन समाजमा मूल रूपले सामन्तवाद त जिउँदै छ तर कुनै न कुनै रूपले आधुनिक पूंजीवादी उद्योग र व्यापारको पनि प्रवेश भैसकेको छ भने त्यसलाई अर्ध सामन्ती व्यवस्था भनिन्छ । उत्पादनको सामन्ती परम्परामा पूंजीवादी उत्पादन पद्धति पनि घुसेकोले नै त्यसलाई अर्ध सामन्ती (आधा सामन्ती) भनिएको हो । नेपाल अहिले अर्धसामन्ती अवस्थामा छ ।

## १६. अवैधानिक:–

विधान र ऐन कानूनले दिएको सीमालाई तोडेर गरिने सङ्घर्षलाई अवैधानिक या गैरकानूनी सङ्घर्ष भनिन्छ । शोषक जमिन्दारहरूले थुपारेको जमीन जनताकै (शोषणबाट थुपारिएको) हो । तर वर्तमान कानूनले त्यसो नमानी जमिन्दारले न्यायपूर्ण तरीकाले कमाएको ठहराउँछ, सरकारले चाहिं भूमिहीन र गरीब किसानलाई जमीन पनि बाँड्दैन र

जमिन्दारका जमीनको रक्षा गर्न सबै सहयोग गर्छ । अर्कातिर जमीन-दारका साथमा रहेको जमीन किसानमा नबाँडिए जनताको दुःख दर्द मेटिन्न । त्यसैले जनताले कम्युनिष्ट पार्टीका नेतृत्वमा ठूला जाली जमीनदारहरूबाट बलजफ्ती जमीन खोसी गरीब भूमिहीन किसानमा बाँड्नु पर्छ । यसरी कानूनको घेरा तोडेर सङ्घर्ष गर्दा ऐन कानूनले मान्यता नदिने हुनाले त्यस्ता सङ्घर्षहरूलाई अवैधानिक अर्थात् गैर कानूनी सङ्घर्ष भनिएको हो ।

## १७. अतिरिक्त मूल्यः–

सिद्धान्ततः कुनै मजदूरले ज्याला त्यति पाउँछ; जति उत्पादनको अन्य साधनका अनुपातमा उसले उत्पादन गर्न सक्दछ । फेरी कुनै मजदूरले ५ घण्टा काम गरेको वास्तविक पारिश्रमिकले आफ्नो परिवारको जीवि-का चलाउन सक्छ भने उसले ५ घण्टा मात्रै काम गर्दछ तर सामन्ती पुंजीवादी अर्थ व्यवस्थामा मजदूरसँग उत्पादनका कुनै साधन नहुनाले आफ्नो श्रम शक्तिलाई सस्तोमा बेच्न बाध्य हुनु पर्छ, फलस्वरूप ५ घण्टा भन्दा बढ़ी श्रम गर्नुपर्छ, भनौं ९ घण्टा काम गर्नुपर्छ । तर श्रमिकले केवल ५ घण्टाको ज्याला पाउँछ । यसप्रकार ५ घण्टाको ज्याला पाउन अतिरिक्त ४ घण्टा ज्यालादारी गर्नु पर्छ । त्यसैलाई "अतिरिक्त मूल्य' भन्दछन्, यो मूल्य व्यवसायका मालिकले खाने गर्दछन् ।

अर्को तरीकाले उल्लेख गरौं – भनौं यौटा मजदूरको दैनिक उत्पादनशीलता रू. २०।- छ । तर पुंजीपतिले उसलाई जम्मा रु. १२।- मात्र दिन्छ । र मजदूरले बाँकी रु. ८।- को दावी गर्न सक्दैन, किनभने उ आफूसँग केही साधन नहुनाले रु. १२।- मै सन्तोष गर्न बाध्य छ। बाँकी ८।- रु. व्यवसायका मालिकले खाने गर्दछ । यसप्रकार रु. १२।- कमाउन एक श्रमिकले रु. ८।- बराबरको बढ़ी काम गर्नु पर्ने हुन्छ, त्यही अतिरिक्त श्रमको मूल्यलाई अतिरिक्त मूल्य भन्दछन् ।

## १८. अदालतः–

राज्यले निर्माण गरेको कानून स्वयं लागू हुंदैन । त्यसैले यसको व्याख्या र अपराधीलाई अपराध हेरी कानून अनुसारको सजाय तोक्नको निम्ति एउटा संगठन चाहिन्छ । त्यस संगठनमा कानूनलाई राम्ररी बुझ्ने र लागू गर्न सक्ने सक्षम मानिसहरू चाहिन्छ । यो काम शासनका सा-साना इकाईहरूमा पनि लागु गर्नुपर्ने हुंदा आवश्यकता हेरी देशका निश्चित ठाउँहरूमा कार्यालय खोलेर कानूनको कार्यान्वयन गर्ने ठाउँलाई अदालत भन्दछन् ।

## १९. अन्तर्क्रिया:—

एक किसिमको दार्शनिक चिन्तन प्रणाली जसको मान्यता अनुसार कुनै पनि वस्तुको अस्तित्व र विकासमा अर्को वस्तुको सहयोग अन्तर्निभरता रहन्छ । यसको रूप सार्वभौमिक हुन्छ । प्राचीन भारतीय दर्शनको वैशेषिक दार्शनिक प्रणालीमा यसैको मिल्दोजुल्दो चिन्तन "अन्वयव्यतिरेक" को सिद्धान्त नामले प्रख्यात छ । जसको सूत्रात्मक रूप "तत्सत्वे तत्सत्ता तदभावे तदभावः" हो । अर्थात् त्यो वस्तुको अस्तित्वमा अर्को वस्तुको पनि सत्ता छ । त्यसको अभावमा अर्को वस्तुको पनि अभाव हुन्छ । प्रकृति विज्ञानमा जीवनको अस्तित्व प्राकृतिक वातावरणमा रहेको अन्तर्क्रिया हो । समाज विज्ञानमा उत्पादक शक्तिको अन्तर्क्रिया नै विकासको मुख्य लक्षण हो ।

## २०. अज्ञेयवाद:—

वस्तुगत जगत्को साररूप, तिनका नियम प्रक्रियाहरूलाई मानिसले बुझ्न सक्दैन भन्ने विचार प्रणालीलाई अज्ञेयवाद भनिन्छ । यस किसिमको चिन्तन प्रणालीले विज्ञानको भूमिकालाई वस्तुमा घटेको सामान्य एवं निरपेक्ष घटनाको रूपमा स्वीकार गर्छ । वेद - उपनिषद्को "नेति नेति" सिद्धान्त पनि यही अज्ञेयवाद हो । सामाजिक जीवनमा अज्ञेयवादले यथास्थितिलाई बल प्रदान गर्छ । मानिसले संसारका बारेमा केही जान्न र बुझ्न सक्दैन भनेर त्यसलाई बदल्ने प्रक्रियामा केही पनि गर्न सकिंदैन भन्ने मान्यता नै यस दर्शन प्रणालीको मुख्य सार हो ।

## २१. अद्वैत वाद:—

सुप्रसिद्ध पुर्वीय दार्शनिक प्रणाली हो । पाश्चात्य देशमा पनि यसको विशिष्ट स्थान रहेको छ । जस अनुसार सम्पूर्ण विश्व ब्रह्माण्डको परिघटनाको आधार एउटा मात्र हुन्छ । जस्तैः– ब्रह्म सत्यं जगत् मिथ्या जीवो ब्रह्मैवनापरः" यो सम्पूर्ण जीवन जगत् असत्य हो एकमात्र सत्य ईश्वर हो । जीवन भनेको पनि ईश्वरकै रूप हो । अद्वैतवाद दुई किसिमको हुन्छ । अध्यात्मवादी अद्वैतवाद अर्को भौतिकवादी अद्वैतवाद । भौतिक अद्वैतवादका अनुसार जीवन जगत्को एक मात्र आधार भौतिक वस्तु हो यसमा चेतनाको कुनै पनि भूमिका रहँदैन । भन्ने रहेको छ । यस चिन्तन प्रणालीका आधारमा समाजमा ठूला व्यक्तिको महत्वपूर्ण भूमिका रहेको हुन्छ । यसलाई चुनौति दिन सकिंदैन भन्ने मान्यतालाई पुष्टि गर्दछ ।

## २२ अध्ययन :—

समाज विकासको क्रममा प्राप्त भएका व्यावहारिक क्रियकलापहरु र सैद्धन्तिक मान्यताहरु प्रणालीहरु र तौर तरिकाहरुको ज्ञान प्राप्तिलाई अध्ययन भनिन्छ। अध्ययन २ किसिमको हुन्छ। १– वैज्ञानिक अध्ययन प्रणाली २– निरपेक्ष ज्ञानको अव्यवहारिक अध्ययन प्रणाली। समाज, जीवन जगत्का कुराहरुलाई क्रमिक र सुसम्बन्ध रुपमा अध्ययन गर्नु वैज्ञानिक अध्ययन प्रणाली हो भने यसको विपरीत निरपेक्ष ज्ञानको लागि गरिने अध्ययन प्रणाली निरपेक्ष अध्ययन प्रणाली हो।

## २३ अनिश्वरवाद :—

जीवन जगत्को उत्पत्तिका निम्ति ईश्वरको आवश्यकता भन्ने सिद्धान्तको आधारमा ईश्वर माथि विश्वास नगर्नु र देवी देवता एवं रुढीवादी धार्मिक मान्यताको अस्तित्वलाई चुनौति दिनु अनिश्वरवाद भन्दछन्। यसैलाई नास्तिकता पनि भनिन्छ। खास गरेर भौतिकवादीहरुले यसको प्रचार प्रचारमा महत्व पूर्ण भूमिका खेलेकाहुन्छन्।

## २४ अनुमान:—

दार्शनिक प्रमाणहरु मध्ये एउटा प्रमाण। वैशेषिक दर्शनको आधारमा "अनुमिति करणम् अनुमानम्" सामान्य लक्षण द्वारा विशिष्ट लक्ष्यमा पुग्नु अथवा "लिङ्गात् लिङ्ग ज्ञानम्" एकांश देखे पछि पूर्णांशको ज्ञान तर्फ अगाडि बढ्नुलाई अनुमान भन्दछन्। अनुमान प्रक्रियामा १ प्रतिज्ञा २ हेतु ३ उदाहरण ४– उपनयन ५ निगम। यी ५ वटा आधार चाहिन्छन्। जस्तै -
१ प्रतिज्ञा :– पहाडमा आगो छ। २ हेतु :– किन भने त्यहाँ धूवाँ पुत्ताएको छ। ३– उदाहरण जहाँ जहाँ धुवाँ पुत्ताउँदछ त्यहाँ त्यहाँ आगो हुन्छ। जस्तै हामीहरूको भान्सा घर। ४ उपनयन :– घरको भान्सामा धूँवा पुत्ताउँदा आगो बले झैं पहाडमा पनि धूँवा पुत्ताएको देखिन्छ। ५ निगम :– त्यसै कारण धूँवा पुत्ताएको पहाडमा पक्का पनि आगो छ भन्ने अनुनान गर्न सकिन्छ। अनुमान ३ किसिमको हुन्छ। १ पूर्ववत् अनुमान। २ शेषावत् अनुमान ३ सामान्यता दृष्ट अनुमान। १ कारण देखेर कार्यको अनुमान गर्नु लाई पूर्ववत् अनुमान भनिन्छ। जस्तै आकाशमा कालो बादल गर्जेको सुने पछि पानी वर्षने अनुमान गर्न सकिन्छ किन भने कालो बादल गर्जदा पहिले पनि पानी आउने गर्दथ्यो। २ कार्य देखेर कारणको अनुमान गर्नलाई शेषशत् अनुमान भनिन्छ। जस्तै :– नदीको किनारा बसेको मानिसले नदीमा एकाएक वाड आएको देख्यो भने बर्षा भएको नदेखे पनि नदीको शीर तिर

कतै वर्षा भएछ भन्ने अनुमान गर्न सक्छ। ३. कुनै वस्तु एक ठाउँबाट अर्को ठाउँमा पुगेको देखियो तर हिंडेको देखिएन भने पनि त्यो वस्तु पक्कै गतिशिल रहेको अनुमान गर्न सकिन्छ। राति सुत्ने बेलामा पूर्वमा देखिएको तारो बिहान पश्चिम तिर देखियो भने रात भरि तारो गतिशील रहेको अनुमान गर्न सकिन्छ। त्यसैले पृथ्वी गतिशील भएको पनि दर्शाउँछ ।

## २५ अवस्था :—

( अस्तित्वको अवस्थितिलाई अवस्था भनिन्छ ) वैज्ञानिक ज्ञानको एउटा प्रमाली, गतिशील भौतिक वस्तुहरुको विशेषता, क्षमता र अवस्थितिलाई अवस्था भनिन्छ। यस अन्तर्गत वस्तुका मूलभूत गुणहरू परस्पर सम्पर्कहरू तिनबाट उत्पन्न विविध रूपहरू पनि पर्दछन्। प्रकृति विज्ञानमा परमाणु अन्तर्गत रहने इलेक्ट्रोन, प्रोट्रोन, न्युट्रोनहरूको अविरल र त्यसबाट उत्पन्न विविध गति र तिनीहरूका रूपहरू भन्ने बुझिन्छ। समाज विज्ञानको यसले कुनै निश्चित समयको ढाँचा, उत्पादन पद्धति एक शक्तिहरूको व्याख्या गर्दछ।

## २६ असीम--ससीम :-

भौतिक संसारको अखण्डनीय, असर्जनीय र अविनाशी प्रकृति परिणामात्मक अक्षुण्णता र त्यसका अनगुणको अन्तहीन प्रक्रियालाई असीम भनिन्छ। असीमका मूर्तघटना एवं तिनका वस्तुगत सापेक्षिक विशेषतालाई ससीम भनिन्छ। ससीम असीम कै अभिव्यक्तिको एउटा रुप हो।

## २७ अरब लीग :—

मिश्र, सिरिया इराक, जोर्डन, लेबनान, यमन, सउदी अरब आदि देशमा सहयोग स्थापना गर्न १९४५ मा यस सङ्घ ( लीग ) को स्थापना भएको हो लिबिया, सुदान, ट्युनिसिया, मोरक्को, कुवेत, अल्जिरिया र दक्षिणी यमन यस लीगमा पछि सामेल भए।

## २८ असंलग्नता :--

पहिलो विश्वयुद्ध पछि, अझ सोभियत समाजवादी अक्टोबर क्रान्ति पछि संसारमा समाजवादी शिविर साम्राज्यवादी शिविर खडा भए, संसारका देशहरू कुनै न कुनै शिविर तिर तानिन थाले। त्यसै बीच ती दुई मध्ये कुनै पनि शिविर तिर न लागि स्वतन्त्र बस्ने नीति केही देशले अपनाउन थाले। त्यसै नीतिलाई असंलग्नता ( कतै संलग्न न हुने ) या तटस्थता भनिन थाल्यो। यसको स्थापनाका लागि संगठित प्रचलन सन् १९५५ मा बाङ्डुङ् सम्मेलन बाट शुरू भयो। टीटो नासीर र नेहरू यसका जन्म दाता हुन्' हाल यसको संख्या १०१ पुगेकोछ।

## २९. असंलग्न परराष्ट्र नीति :—

असंलग्न परराष्ट्र नीतिका आधारमा अरू देशसंग सम्बन्ध स्थापित गर्नुलाई असंलग्न परराष्ट्र नीति भनिन्छ। आफूलाई असंलग्न या तटस्थ भन्ने राष्ट्रहरु धेरै भएता पनि वास्तवमा त्यसै नीति अनुसार चल्न भने सकेका छैनन्। नेपालले पनि आफूलाई असंलग्न नीति लिने राष्ट्र भन्दछ तर अप्रत्यक्ष रूपले अमेरिका संग संलग्न छ।

## ३० अन्तर्राष्ट्रियतावाद :—

सोभियत संघमा सन् १९१७ को सर्वहारा अक्टूबर क्रान्ति पछि सर्वहाराको राज्य व्यवस्थाको सूत्रपात भयो। १५ – २० वटा देशमा कम्युनिष्टको शासन व्यवस्था कायम भयो, अनेकौं देशमा क्रान्तिकारी आन्दोलन हरू अगाडि बढि रहेका छन्। कुनै पनि देशको क्रान्ति विश्व क्रान्तिकारी प्रक्रियाको अभिन्न अङ्ग भएको हुनाले एउटा देशका सत्ताधारी हुन वा संघर्ष-रत, एकदोस्रा प्रतिको नैतिक भौतिक सहयोग गर्न पर्ने कर्तव्यलाई अन्त–र्राष्ट्रियतावाद भनिन्छ। अथवा कुनै पनि देशका न्यायपूर्ण संघर्ष एवं मुक्ति आन्दोलनको समर्थन गर्नु पनि अन्तर्राष्ट्रियतावाद हुन्छ। दक्षिण अफ्रिकाको रंग भेदवाद विरुद्ध भइरहेको दक्षिण अफ्रिका जनताका संघर्षको समर्थन हाम्रो सबैको अन्तर्राष्ट्रियतावादी कर्तव्य हुन आउँछ।

## ३१. अभियान :—

निश्चित उद्देश्य राखेर मानव समुदायको शान्ति, सुरक्षा समृद्धिका लागि इलाका देश व्यापी, वा अन्तर्राष्ट्रिय स्तर मैं सञ्चालित गरिने व्यापक कार्यक्रमलाई अभियान भनिन्छ। समाजमा रहेका कुरीति अन्धविश्वास गरीबी दासताका विरुद्ध गरिने कार्यवाहीलाई पनि अभियान भनिन्छ। आजको विशेष परिस्थितिमा परमाणिक अस्त्रका विरुद्ध विश्वको सुरक्षाका लागि गरिने मानवीय संघर्ष विश्व शान्तिका लागि महत्वपूर्ण अभियान साबित भएको छ। यस्तो अभियान संसार भरिका प्रगतिशील समूहको नेतृत्वमा सफल हुन्छन्। कुनै पनि क्षेत्रको अभियान प्रगतिशील शक्तिको नेतृत्वमा मात्र सफल हुन सक्छ।

### "आ"

## ३२. आतङ्कवाद :–

व्यक्ति विशेषका विरुद्ध गरिने प्रतिहिंसात्मक कारवाहीहरूलाई आतङ्कवाद भनिन्छ। सामान्यतया व्यापक जनताको समर्थन प्राप्त नगरी, तिनलाई सरिक नगराई, गोलबन्द नगरी सञ्चालन गरिने हिंसात्मक विद्रोहलाई 'आतङ्क" भनिन्छ। जनताको सामूहिक प्रयासद्वारा गरिने क्रान्ति – प्रति विश्वासको कमी र सहकारी परिस्थितिको अनुपस्थितिमा उत्पन्न हुने मनोगत दुस्साहसवादले आतङ्क-

बाद उब्जन्छ। यसले व्यापक जनतालाई उत्साहित नपारी त्रस्त तुल्याउँछ। जनताबाट अलगिंदै जान्छ।

## ३३. आलोचना :–

गल्तीहरू औंल्याउने काम अथवा त्रुटिहरू प्रति व्यवस्थित र शिष्टरूपले गरिने विरोध हो । अर्थात आलोचना भनेको गल्ती र कमिहरूलाई औंल्याउनु हो र यो शिष्ट पनि हुन सक्छ र ध्वंशात्मक तथा अशिष्ट पनि हुन सक्छ.

## ३४: आत्मालोचना :–

आफूप्रति गरिने आलोचना अथवा आफ्ना त्रुटीहरूलाई इमा द री साथ महशुस गर्नु।

## ३५. आत्मसमर्पणवाद :–

क्रान्ति विश्व इतिहासको अनिवार्य र अविछिन्न धारा हो भन्ने बुझेर पनि क्रान्तिकारी परिश्रम र अनुशासन पालन गर्न नसकी प्रतिक्रियावादी अर्थात् जनता, क्रान्ति तथा पार्टी विरोधी काम कारवाही या आचरण गर्नु आत्मसमर्पणवाद हो।

## ३६. आदर्शवाद :—

देख्दा राम्रो देखिने तर व्यवहारमा लागु हुन नसक्ने विचार या सिद्धान्त लाई आदर्शवाद भनिन्छ। केही आदर्शवादीहरू भन्ने गर्छन् – शोषक र शोषित जे सुकै भएपनि एउटै देशका दाजु, भाई हुन्, मिलेर प्रगति गर्नु पर्छ। झट्ट हेर्दा यी कुरा राम्रै जस्ता देखिन्छन्, तर व्यवहारमा त्यस्तो हुन सक्दैन। शोषक शोषित वर्गका बीच संघर्ष नभई छाड्दैन। त्यसैले पञ्चायती वर्ग समन्वयवाद र गरीबीको "आदर्श पूँजीपति" को कुरा आदर्शवादी विचार या सिद्धान्त हुन्। "क्रान्ति भएमा जाति हुन्थ्यो भन्ने तर आफू क्रान्तिकारी काममा भाग नलिने विचारलाई पनि आदर्श नै भनिन्छ। दर्शनमा आदर्शवाद भनेको अध्यात्मवाद हो।

## ३७. आत्माहीनता :—

यो शब्दले प्रायः जसो मानवको मनोदशाको स्थितिको बोध गराउँछ। मानिसमा प्रायस दुइ प्रकारको मनोभावहरू हुन्छन् एउटा हो आत्माभिमान र अर्को हो आत्माहीनता। आत्माभिमानले वास्तविक शक्ति बुद्धि र क्षमता भन्दा बढी प्रदर्शन गरेर अरूको अस्तित्व विकास र महत्वलाई अस्वीकार गर्छ भने आत्महीनता आफूमा भएको वास्तविक शक्ति बुद्धि र क्षमतालाई घटाएर हेर्छ र जीवन उद्देश्य प्राप्ति गर्ने आशा र जीवन देखिनै पलायन हुने हिन भावना राख्दछ यो भावना नै आत्माहीनता शब्दको परिचय हो।

## ३८. आदिम–साम्यवाद :—

मानव समाजको प्रारम्भिक चरणतिर उत्पादनका साधनहरू ( जङ्गल शिकार, कन्दमूल, फलफूल र नदीका माछा ) साझा हुन्थ्यो। यसै गरी वासको निम्ति गुफा र ओडारहरू पनि कुनै एउटा परिवार र व्यक्तिको निजि हुँदैनथ्यो।

साम्यवाद दुइ खालका हुन्छन्-एउटा हो मानव सभ्यताको विकासको प्रथम खुडकिलोमा जीवनका निम्ति प्रकृतिले उपलब्ध गराएका स्रोतलाई सामुहिक रूपमा प्रयोग गर्नु र अर्को हो सभ्यताका समाज विकासका अनेकौं युग पार गरी उत्पादनका सबै साधनहरूलाई आधुनिक सामुहिककरण गरी योग्यता अनुसार काम र आवश्यकता अनुसार मामको वितरण पद्धतिमा आधारित वैज्ञानिक साम्यवाद र पहिलोलाई आदिम साम्यवाद भनिन्छ।

## ३९. आप्तवाक्य :—

प्रमाण शास्त्रको एउटा प्रमाण। समकालिन अवस्थामा आफ्नो प्रस्तावनालाई सिद्ध गर्ने कुरामा सिद्धान्तहरुको सहारा लिनु "आप्तवाक्य" भनिन्छ। धर्म शास्त्रीहरूले आफ्नो मान्यतालाई प्रमाणित गर्न वेद र उपनिषदका सूत्रहरूको हवाला दिएर त्यसलाई सिद्ध गर्ने प्रयास गरेका हुन्छन्। त्यस्तै गरि कयौं नेता अथवा पाटहरुले पनि आफ्ना प्रस्ताव एवं प्रस्थापनाहरूलाई सिद्ध गर्न मार्क्स, एङ्गेलस, लेनिनका उदाहरणहरू अगाडि सार्दछन्। यो उनीहरूका लागि मजबूत "आप्तवाक्य" हुन जान्छ।

## ४०. आत्मगत शक्ति :–

कुनै पनि आन्दोलन, अभियान वा क्रान्तिका लागि चाहिने नेतृत्वको वैज्ञानिक पथ–प्रदर्शन, कार्यकर्ताको निष्ठावान् संलग्नता जनताको सुसंगठित चेतनाका र सांगठनीक गर्ने गतिविधिको कुल योगलाई आत्मगत शक्ति भनिन्छ। आत्मगत शक्ति सुदृढ नभई कुनै पनि आन्दोलन अभियान वा क्रान्ति सफल हुन सक्दैन।

## ४१. आस्तिकता:–

ईश्वरको अस्तित्वलाई स्विकार गर्नु लाई आस्तिकता र त्यस्तो विश्वास गर्नेलाई आस्तिक भन्दछन् अर्थात परमेश्वर, पुर्पुरो, परम्परा; पुनर्जन्म परलोकमा विश्वास गर्नु लाई आस्तिकता भनिन्छ। यहि आस्तिकता प्रतिक्रियावादी शोषण दमन को मुख्य हतियार हो। वैज्ञानिक चेतना द्वारा मात्र आस्तिकताको भावनात्मक जालोच्यातन सकिन्छ।

## ४२. आत्मा :-

आत्माको उत्पत्ति सपनाबाट भएको हो। पहिलेका मानिसले वस्तुगत नियम वा विज्ञान न जान्दा सुतेका वेलामा सपनामा अतातनै

घुमेर आए पनि आखिर आफूलाई विस्तरामैं पाउँथे । त्यस पछि विचार गर्दा शरीर भित्र यस्तो कुनैं तत्व छ जसलाई कस्तैं कुराले पनि नष्ट गर्न सक्दैन । जरुर पनि त्यो शक्ति शाली चीज हुनुपर्छ भन्ने बिचार प्रतिपादित भएको हुनाले त्यसलाई आधार मानेर अध्यात्मवादी दार्शनिक प्रणालीको सुत्र-पात भयो । आत्माको सिद्धान्त अनुसार आत्माको २ किसिमको हुन्छ । एउटा जिवात्मा अर्को परमात्मा । सुख दुःख को भोग गर्ने अनुभव गर्ने जीवात्मा प्रत्येक प्राणीमा रहेको छ । अर्को परमात्मा एउटैं छ र त्यो संसार भरि व्याप्त छ । उसले कुनै सुख दुःख को भोग गर्दैन खाली दर्शक मात्र भएर बस्छ । यही जिवात्मा र परमात्माको आधारमा भारतीय दार्शनिक प्रणाली ४ भागमा बाँडिएको छ ।

१. जीवात्मा र परमात्मा एउटैं कुराहो = अद्वैतवाद ( शांकर मत )
२. जीवात्मा र परमात्मा अलग अलग हुन = द्वैतवाद ( रामाउज मत )
३. जीवात्मा र परमात्मा अलग अलग हुनु स्भाविकैं हो तर अन्तिममा एउटैं हुन् = द्वैतद्वैतवाद ( निम्बार्कमत )
४. जीवात्मा र परमात्मा सामान्य दुइटा देखिए पनि विशेष एउटैं हुन्छन् = विशिष्टाद्वैत ( माध्वमत )

" ❦ "

## ४३. इन्द्रियः—

जीवित प्राणीलाई भौतिक वस्तुसंग सम्पर्क गराउने माध्यमलाई इन्द्रिय भन्दछन् यसको केन्द्र मन हो ।

## ४४. इलाकाबादः—

सिगैं देशको समस्यालाई छोडी ईलाकाको मात्र समस्यालाई लिने दार्शनिक भाषामा भन्दा अनेकता बीचको खासक्षेत्रवा अन्तः सम्बन्धलाई वास्ता नगर्ने र त्यसैं सोचाईका आधारमा उठ्ने सागुरो फुटबन्दी विचारलाई "इलाकाबाद" भनिन्छ ।

## ४५. इन्कलाबः—

उर्दू भाषामा क्रान्ति र परिवर्तन लाई भन्दछन् ।

## ४६. इतिहासः—

इतिहास भनेको मानव जातीले आदिम युगदेखि एलेसम्म आफ्नो गास बास कपास र सुरक्षाको व्यवस्थागर्न तथा निरन्तर उन्नति गर्नका लागी गरिएको उत्पादनका सङ्घर्ष; वर्ग संघर्ष अनि बैज्ञानिक अनुसन्धान र प्रयोगको निमित्त गरेका सामाजिक जीवनका सम्पूर्ण पक्षहरुका संघर्षको, धवका प्रयास र

उपलब्धीहरुको काल क्रमिक बयान हो । विश्व विकासका निर्णायक शक्ति जनता हुन; अतः जनता नै इतिहास निर्माता हुन् ; दुई चारजना चक्रवर्ति सम्राट्, महाराजा, राजा र महा–सामन्तका विजय कथाको संगालो वास्तविक इतिहास नभै असंख्य जनताको संघर्ष र निर्माणको गाथा नै जनताको इतिहास वास्तविक इतिहास हो ।

४७. इमान्दारी:–

कुनै विषयको सच्चाई प्रतिको वफादारी र त्यसबाट कुनै किसिम बारे पनि भ्रष्ट हुन नसक्ने गुणलाई इमान्दारी भनिन्छ ।

४८. ईश्वरवाद:–

अध्यात्मवादी दर्शनको मूल प्रस्थापना ईश्वर सार्वभौमीक सर्वकालिक संप्रभूता को प्रतिक हो । प्राकृतीक भौतिकवादबाट आरंभ दार्शनिक प्रणाली समाज विकासको क्रममा बहुदेवतावादी चिन्तन प्रणालीको बाटो हुदै सामन्तवादी सामाजिक पृष्ट भूमिमा ईश्वर वादले गहिरोरुपमा जरा गाड्यो । पुजिवादमा विज्ञानको प्रगतिले इश्वरवादको भ्रम हटदै गयो । र समाजवादी चिन्तनको विकासले त यस प्रकारको चिन्तनबाट नै हटाउदै लग्यो ।

४९. ईच्छाशक्ति:—

खास उद्धेश्यमा लागेका व्यक्तिहरुको जस्तो सुकै परिपेक्षमा पनि उद्धेश्य प्रति सचेत र दृढ रहने आन्तरिक ईच्छालाई इच्छाशक्ति भनिन्छ । जुन व्यक्तिको ईच्छा शक्ति जति प्रबल हुन्छ । आफ्नो लक्ष र उद्धेश्य प्रति उतिकै निष्ठावान र दृढ रहन्छ, यो खासगरेर राजनैतिक एवं सामाजिक कार्यकर्ता तथा नेताहरुमा हुनु पर्ने ठुलो आत्मिक गुण हो ।

"उ"

५० उग्र वामपन्थी:—

क्रान्तिकारी विचार सिद्धान्तलाई त बुझ्नु; व्यवहारमा उतार्ने काममा हतारिएर तथा विद्यमान परिस्थिति भन्दा धेरै अगाडि बढेर आफ्नो शक्तिको बढी मूल्याङ्कन गरी हठ, जिद्दी र जोर-ज़बरजस्ती पूर्वक त्यसलाई लागु गर्न खोज्ने विचार, प्रवृत्ति, र व्यवस्थालाई उग्र वामपन्थी भनिन्छ । उद्धरण भित्र " वामपन्थी " मात्र लेख्दा पनि उग्र वामपन्थी भन्ने बुझिन्छ । समस्याको या शत्रुपक्षको; सबै पक्षको मूल्याङ्कन नगरी त्यसका कमजोर पक्षको मात्र ध्यान राखेर कार्यवाही शुरू गर्ने प्रवृतिले उग्र वामपन्थी या " वामपन्थी " प्रवृत्तिलाई जन्म दिन्छ ।

सामन्ती दलाल र नोकरशाही पूंजीवादी व्यवस्थालाई भत्काउनु पर्छ, यो सही सामाजिक दिशा हो। त्यसलाई मार्क्सवादी – लेनिनवादी सिद्धान्तका आधारमा वनेको क्रान्तिकारी पार्टीले नै भत्काउन सक्छ, यो सही सिद्धन्त हो। यति कुरा बुझेर पनि वर्तमान सत्ताको सैनिक शक्ति, अन्तर्राष्ट्रिय प्रतिक्रियावादी संग त्यसको साँठगाँठ, देशिय प्रतिक्रियावादी वर्ग र तत्वको गठबन्धन आदि कुराको ठोस मूल्याङ्कन नै नगरी, व्यापक तयारी विना सानै शक्तिले हतार हतार हतियार उठाएर धदाम् धुदुम पारेर जित्न सकिन्छ र सत्ता हात पार्न सकिन्छ भन्ने विचार उग्र वामपन्थी हो।

### ५१. उग्रवादः-

कुनै पनि समस्यालाई देश–काल परिस्थितिका आधारमा नहेरी नानाथरी आतङ्क सृजना गरेर समाधान गर्न खोज्ने प्रवृत्तिलाई उग्रवाद भनिन्छ।

### ५२. उपनिवेशः–

एउटा साम्राज्यवादी देशले अर्को देशको सम्पूर्ण प्रभुसत्तालाई खतम गरेर प्रत्यक्ष रुपमा आफ्नो राजनैतिक, आर्थिक, सामाजिक साँस्कृतिक सत्ता कायम गर्नुलाई उपनिवेशवाद भनिन्छ। यस्तो स्थितिलाई उपनिवेशवादी चरित्र भन्छन्। अचेल यस्तो खालको उपनिवेश कायम गर्ने चलन छैन। बरू नव उपनिवेशको प्रचलन बढी छ।

### ५३. उत्पादनको साधनः-

प्राकृतिक कच्चा वस्तु र मानवश्रम मिलेर वस्तु बन्दछ। मानिसले उत्पादनको काम गर्दा प्राकृतिक वस्तु माथि गर्दछ, जस्तै खानी, जङ्गल, खेत आदि। तिनले काम गर्दा विभिन्न प्रकारका औजारहरू प्रयोग गर्दछन्। जस्तै–कुटो, कुदालो, बन्चरो मेसिन कारखाना यातायातका साधन आदि। यस प्रकार उत्पादनका कार्यमा प्रयोग गरिने प्राकृतिक वस्तुहरु औजारहरू र अन्य थरिथरिका सर–सामानलाई "उत्पादनका साधन" भनिन्छ। जस्तै भूमि, औजार पूंजी र श्रम।

### ५४. उत्पादक शक्तिः.

मानिसले आफ्नै हातले प्रयोग गर्ने औजार (अर्थात मानवले आफ्नै हातले बनाएका उत्पादन साधन) र मानिसको श्रमशक्तिको संयुक्त रूपलाई उत्पादन शक्ति भन्दछन्।

## ५५. उत्पादन सम्बन्धः-

आफ्ना आवश्यक सामग्रीहरू उत्पादन गर्न मानिसले एक अर्कोमा निश्चित सम्पर्क स्थापना गर्दछ यही सामाजिक सम्बन्धका परिधिभित्र रहेर मानिसले प्रकृतिमाथि काम गर्दछ र उत्पादन गर्दछ । यसरी काम गर्दा उत्पादक शक्ति र उत्पादनको स्वामीत्व बीच विशेष प्रकारको सम्बन्ध कायम हुन्छ। यसैलाई उत्पादन सम्बन्ध भनिन्छ। स्पष्टमा भन्दा उत्पादन सम्बन्ध उत्पादनका साधन र उत्पादित वस्तुको स्वामीत्व को स्वरूप हो।

उत्पादनका साधनमा सार्वजनिक स्वामीत्व भए शोषण मुक्त जनताका बीच मेल रहन्छ। साझा विकास हुन्छ तर उत्पादन सम्बन्धमा निजी स्वा-मीत्व छ भने जनता अधीनस्थ हुन्छन्, उनको विकास रोकिन्छ उत्पादनको असमान वितरण हुन्छ र उत्पादक शक्ति तथा उपादन सम्बन्ध बीच शत्रुता पूर्ण संघर्ष हुन्छ ।

## ५६. उत्पादन पद्धतिः-

उत्पादनका साधन, उत्पादक शक्ति, तथा उत्पादन सम्बन्धको समुच्चय लाई उत्पादन पद्धति भनिन्छ। उत्पादन पद्धति नै समाज व्यवस्थाको मूल आधार हो; उत्पादन पद्धतिको विकास अनुसार नै मानव समाजको इतिहास-लाई ५ युगमा बाँडिएको छ – आदिम साम्यवाद, दासयुग, सामन्ती युग, पूँजीवादी युग र समाजवादी युग।

## ५७. उदारतावादः-

कुनै पनि क्रान्तिकारी शक्तिले आफूले लिएको सिद्धान्त, कार्यक्रम र रणनैतिक लक्षप्रति गरिने एक प्रकारको खुलापन अर्थात वेवास्तापूर्ण छुट ( Concession ) लाई उदारतावाद भनिन्छ। अर्थात् एक प्रकारको लपस्तरो-पनलाई पनि उदारतावाद भनिन्छ।

## ५८. उटोपियन समाजवाद ( काल्पनिक समाजवाद ):-

मार्क्स, एङ्गेल्स भन्दा पहिल्यैका फूरिए आदि दार्शनिकहरूले परिकल्पना गरेको काल्पनिक समाज व्यवस्थालाई उटोपियन समाजवाद भनिन्छ।

त्यसमा इतिहासको वस्तुगत आधार नभएर खाली समाजमा शोषण आदि दुखहरू नभए हुन्थ्यो भन्ने सीधासाधा परिकल्पना हुन्छ।

## ५९. एकपक्षीयताः-

कुनै पनि कुराका सबै पक्षहरूलाई वास्ता नगरी एकपक्षलाई मात्र

बुझ्नु र त्यसैलाई सबथोक ठानी अड्डी लिनु एकतर्फीपना हो। क्रान्तिको उभारलाई मात्र देख्नु धक्कालाई देख्न नसक्नु, पुराना कुरामा कैयौं राम्रा पक्ष पनि छन् भन्ने नबुझी "पुरानो जम्मै मुर्दावाद" भन्नु एकलकाटेपना या एकतर्फीपना हो।

## ६०. एकदलीय व्यवस्था:-

देशमा एउटै मात्र पार्टी चलाउने र त्यसै पार्टीबाट चुनिएका जन-प्रतिनिधिहरूद्वारा सरकार बनाउने व्यवस्थालाई एकदलीय व्यवस्था भनिन्छ। यस्तै गरी केही देशहरूमा आफ्नो पार्टीलाई मात्र खुला राखी अरू पार्टी-माथि प्रतिबन्ध लगाएर एकदलीय व्यवस्था कायम गरेका हुन्छन्। जुन अहिले को सन्दर्भमा अप्रिय भएको छ।

## ६१. एकाधिकार:-

यो ग्रीक भाषाको "मोनो पोली" अर्थात् "म एक्लै छु" भन्ने शब्दको भावानुवादबाट बनेको हो। बजारमा मुक्त प्रतियोगिता ( Perfect Competition ) नभएर यौटै उत्पादक वा व्यापारीका हातमा बजार नि-यंत्रण भएपछि एकलौटी व्यापार शुरू हुन्छ। यसका लागि ठूला पूँजीपतिहरु आपसमा सम्झौता गर्दछन्। आफ्नो उद्योगमा प्रतियोगिता गर्न चाहने संग भिडन्त गर्दछन्, गला–तोड प्रतियोगिता ( Throat cut Competition ) गरी अर्काको उद्योगलाई खतम पारिदिन्छन् र अन्तमा सम्पूर्ण बजारमा कच्चा माल किन्ने र आफ्ना तयारी माल बेच्ने काममा एकलौटी कायम गर्दछन्। यस्ता एकाधिकारीले राज्य प्रशासनमा आफ्नो हैकम चलाउँदै अन्त-र्राष्ट्रिय स्तरमा समेत एकाधिकार जमाएर अन्तर्राष्ट्रिय राजनीतिलाई नै तहस नहस पारिदिन्छन्। जापान, अमेरिका र पश्चिमी पूँजीवादी देशहरुले खास खास उत्पादन र मूल्यमा अन्तर्राष्ट्रिय स्तरमै एकाधिकार कायम गरेका छन्। पूँजीवादी एकाधिकार अन्तर्राष्ट्रियस्तरमा चुलिदै गएपछि चरम रूपमा साम्राज्यवाद बन्दछ।

## ६२. ऐतिहासिक भौतिकवाद:-

द्वन्द्वात्मक भौतिकवादका आधारमा इतिहासको भौतिकवादी व्याखा गर्नु; इतिहासको विकासका नियमहरूको अध्ययन गर्नु र तिनलाई सही ढङ्गले बुझ्नुलाई ऐतिहासिक भौतिकवादी प्रणालि मानिन्छ। यस अनुसार आर्थिक गतिविधिलाई समाज विकासको आधार मानेर त्यसका द्वन्द्वात्मक र भौतिक-वादी स्वभावका आधारमा समाजलाई हेरिन्छ।

अध्यात्मवादी दृष्टिकोण राख्नेहरूले समाजको इतिहासलाई भौतिक

संसारदेखि बाहिरको कुनै महान शक्ति "ईश्वर" द्वारा संचालित ठान्दथे; मानव समाजको इतिहासलाई कुनै अलौकिक अवतार महापुरुष, राजा, ऋषि या कुनै नेता विशेषको व्यक्तिगत वीरता र बुद्धिवाट संचालित ठान्दथे । अझै पनि आधुनिक नेपालको एकीकरणको ऐतिहासिक संघर्षलाई अध्यात्म वादीहरु केवल पृथ्वी नारायण शाहको निजी बुद्धि, पुरूषार्थ, र रणकौशलको करामत तथा गुरु गोरखनाथको वरदानको फल आदिका रूपमा मान्दछन् । नेपाल एकीकरणका प्रेरक वस्तुगत तत्व तथा नियम प्रति आँखा चिम्लन्छन् । या तिनलाई कुनैं महत्व दिंदैनन् । यान्त्रिक भौतिकवादीहरू पनि सही ढङ्गोमा पुग्न सक्दैनन् । द्वन्द्वात्मक भौतिकवादी दृष्टिमा नेपालको एकिकरण - संघर्ष यसरी हेरिन्छ ।

१- एकताको प्रयास पृथ्वी नारायण भन्दा सयौं वर्ष अगाडि लिच्छवीकाल देखि नै शुरू भएर बीच-बीचमा धेरै असफल र सफल भइरहे पनि त्यसलाई व्यापक र स्थिर रूप दिने तत्व समाजमा जन्मिनसकेकोले त्यसले व्यापकता र स्थिरता पाउन सकेन,

२- अठारौं शताव्दीको आखिरीतिर नेपाली समाजमा आधुनिक पूँजीवादका प्रारम्भिक तत्वले प्रवेश गर्न थाले र बन्द व्यापारको पनि विकास हुन थाल्यो ।

३- त्यस बेला साठी भन्दा बढी रजौटाहरुको झगडा र लडाईले कर प्रणाली र इलाकीय सामन्तवादी शोषणले गर्दा जनताहरुले खपी नसक्नु कठिनाईहरू भोग्नु परि रहेको थियो र उनीहरूमा एउटै शक्तिशाली केन्द्रीय राजतन्त्रको मातहतमा शान्तिपूर्ण ढङ्गले मिलेर अघि बढने राष्ट्रिय भावनाले बल पाउंदै गयो;

४- रजौटातन्त्रको एक प्रमुख आधार दासप्रथा अनुत्पादक, बोझिलो र विष्फोटक हुंदैं विघटित हुदै गएको थियो ।

५- आधुनिक पूँजीवादी तत्व र बन्द व्यापारको विकासको निम्ती शक्तिशाली केन्द्रीय राज्यतन्त्र र शक्तिको आवश्यकता थियो ।

६- भारतका तमाम रजौटाहरुलाई निल्दै गएको अंग्रेजी साम्राज्यवादसंग एकतावद्ध भएको शक्तिशाली नेपालले मात्र टक्कर लिन सक्थ्यो आदि ।

यिनै ऐतिहासिक, वस्तुगत, सामाजिक, राजनैतिक, आर्थिक र राष्ट्रिय कारण र आवश्यकताहरू ले नैं नेपालको एकीकरणको संघर्षलाई प्रेरित गरेका हुन् । त्यसमा पृथ्वीं नारायग शाह, अमरसिंह थापा आदि नेताहरू तिनै सामाजिक स्थितिले प्रेरित भए। तिनको नेतृत्व सञ्चालन मात्र गरेको हुन् । त्यस एकीकरणलाई विजय सम्म पुराउने शक्ति नेपाली जनता नै हुन ।ऐतिहासिक भौतिकवादले यसैं गरी तथ्यका आधारमा इतिहासको अध्ययन गर्छ र अवैज्ञा-

निक दृष्टिकोणहरुको खण्डन गर्छ।

आजको नेपाल अर्ध - सामन्ती र अर्ध उपनिवेशी अवस्थामाछ। ऐतिहासिक भौतिकवादको नियम नबुझ्नेले आजै नेपालमा समाजवादी क्रान्ति हुनुपर्छ भन्न सक्छ तर वस्तुगत तथ्य के हो भने पहिले सामन्तवाद र उप-निवेशवादलाई पूर्ण उन्मूलन गर्ने "नयाँ जनवादी" क्रान्ति पूरा गरेर मात्र समाजवादी क्रान्तितिर संक्रमण शुरु हुन्छ। त्यो भन्दा पनि अझै बहुदलीय प्रजातन्त्रको बाटोबाट अगाडि बढ्न सकिने कुरा वर्तमान अवस्थाले पुष्टी गरेको छ।

"क"

## ६३. कर्तव्य :—

सामाजिक जीवन बाँच्नकालागी गर्नु पर्ने आवश्यक कामहरु र कुनै पनि राज्यव्यवस्थाले निर्देशित अधिकार सुरक्षित पार्न गरिनु पर्ने कामहरूलाई कर्तव्य भनिन्छ।

## ६४. कट्टरतावादः–

एउटा विशेष परिस्थितिमा मात्र सुहाउने कुरालाई जहाँ पनि र जहिले पनि आँखा चिम्लेर लागुगर्न खोज्नु र त्यसैमा ढिपी कस्नु कट्टरतावाद वा कठमुल्लावाद भनिन्छ।

## ६५. कम्युनिज्मः– (साम्यवाद)

वर्गविहीन सामाजिक व्यवस्था जहाँ उत्पादनका साधनहरु सम्पूर्ण जनताका अधीनमा हुन्छन्, शहर गाँउको अन्तर मेटिन्छ। शारिरिक र बौद्धिक श्रम का बीच को अन्तर हट्छ, विज्ञान तथा उन्नत प्रबिधिका आधारमा उत्पादक शक्तिको निरन्तर विकास भईरहन्छ। राष्ट्र राष्ट्रहरुका बीच बन्धुत्व पूर्ण भावको बिकास सु-स्थीर हुदै जान्छ। त्यसैलाई कम्युनिजम (साम्यबाद) भनिन्छ।

## ६६. कम्यून:—

मार्क्सवादी लेनिनबादी सिद्धान्त अनुसार बनेका समाजवादी व्यवस्थामा साझा खेती र उद्योगमा बाँडिएका गाँउहरुका समूह या उद्योग र व्यवसायहरुका समूहहरूलाई कम्यून भनिन्छ। अलग अलग कम्यूनहरुले आफ्नो आफ्नो कम्यूनका जनताको जीवन को व्यवस्था गर्दछन र सबै कम्यूनहरुको साझा प्रयासले सिंगै देशको बिकास गरिन्छ। अहिले यस प्रकारको कम्यून व्यवस्थालाई समाजवादी सरकार हरुको ठेक्का–प्रथामा दिनथालेका छन् जसले उत्पादनमा दोब्बर वृद्धि हुनथालेकोछ।

## ६७. कम्युनिष्टः—

कम्यून व्यवस्थामा बाँधिएर त्यसैको सामूहिक अनुशासनमा देश र जनताको विकास गर्दै मानव जातिलाई साम्यवादमा पु-याउने ध्येय लिएर हिड्ने, मानिस मानिसका बीच कुनै शोषण अन्याय र भेदभाव देखि नसहने, तिनको विरोधमा एकजूट भएर लडिरहने मार्क्सबादी लेनिनवादी वैज्ञानिक विचारमा दृढ रहेका सर्वहारा वर्गका पार्टीको सामूहिक अनुशासनमा बाँधिएका क्रान्तिकारीलाई कम्युनिष्ट भनिन्छ ।

## ६८. कम्युनार्डोः—

पेरिसमा पहिलो पटक सर्वहारा बर्गले सन् १८७१मा सत्ता लिंदा संघर्षमा भाग लिएका कम्युनिष्टहरूले आफुलाई कम्युनार्डो भन्दथे । जो कम्युनका लागि लडेका थिए ।

## ६९. क्रान्तिः—

सामान्य रुपमा क्रान्तिको अर्थ हुन्छ परिवर्तन; उलट फेर या पुरानो को ठाँउ नयाँले लिनु अर्थात गति चक्र नु तर खास अर्थमा क्रान्ति शब्दले राजनीतिक, सामाजिक परिवर्तनलाई बताउछ । सामन्ती दलाल पूँजीवादी, सामाज्यवादी जस्ता प्रतिक्रियावादी वर्गको राजसत्ता खोस्नुलाई क्रान्ति भनिन्छ,यो मात्र होईन पूंजीवादी क्रान्तिलाई पनि क्रांति भनिन्छ र यस अर्थमा दास समाज विरुद्ध स्थापित सामन्ति समाज पनि क्रान्ति कै उपजहो ।

## ७०. कार्टेलः—

आफ्नो मुनाफालाई सुनिश्चित र सुव्यवस्थित पार्न बजारको आपसमा भाग बण्डा गर्ने, बिक्री र हिस्साको शर्त राखेर सम्झौता गर्न, मालको मूल्य बिभिन्न उद्योग को हाँगामा बाडेर निर्धारित गर्ने र नाफालाई पनि थरि थरिका उद्योगमा निश्चित गर्ने पूँजीपतीहरूको साझा समस्यालाई कार्टेल भन्दछन् ।

## ७१.केन्द्रीकरणः—

कुनै शक्तिलाई एकै ठाउँमा जम्मा गरेर कार्य गर्नु केन्द्रीकरण हो । कुनै पनि वस्तुलाई छर्नु वा अलग अलग राख्ने काम गर्नु विकेन्द्रीकरण हो ।

सिंगो एउटा देशभित्र एउटै नीति बनाएर लागु गर्नु केन्द्रीयकरण हो । त्यसै गरी एउटै देशभित्र स्थानीय रूपमा अलग अलग नीति लागुहुन दिनु बिकेन्द्रिकरणको नीति हो । राज नैतिक अर्थमा विकेन्द्रीकरण भन्नाले अरुलाई पनि सत्तामा सहभागी वनाउनु भन्ने बुझिन्छ ।

## ७२. कोमिन्टर्नः—

कम्युनिष्टहरूको अन्तर्राष्ट्रीय संगठन लाई कम्युनिष्ट ईण्टर नेशनल या कोमिन्टर्न भनिन्छ ।

प्रथम अन्तर्राष्ट्रीय कम्युनिष्ट संगठनः— सन १८६४ मा बेलायतमा मार्क्स र एंगेल्सको नेतृत्वमा स्थापना भएको बिभिन्न देशका कम्युनिष्ट र मजदूर पार्टीहरुको अन्तर्राष्ट्रिय संगठनलाई "प्रथम अन्तराष्ट्रिय" कम्यूनिष्ट संगठन भन्दछन्। यसै लाई बोलचाल "प्रथम अन्तर्राष्ट्रिय" मात्र पनि भनिन्छ। पहिले यसलाई अन्तर्राष्ट्रिय श्रमजीवीहरुको संघ भनिएको थियो। दोश्रो अन्तर्राष्ट्रिय ले यसलाई नै "पहिलो अन्तर्राष्ट्रिय कम्युनिष्ट संगठन "का रूपमा मान्यता दिएको थियो। यो पहिलो संगठन सन १८८६ सम्म रह्यो।

दोश्रो आन्तर्राष्ट्रिय कम्युनिष्ट संगठन :- यसलाई बोलचालमा "दोश्रो अन्तर्राष्ट्रिय" भनिन्छ। मार्क्सको मृत्यु पछि सन १८८९ मा फ्रान्समा एंगेल्सको नेतृत्व र सक्रियतामा यसको पुनर्गठन भयो र सन् १९१४ सम्म रह्यो। १८९५ सनमा एंगेल्सको मृत्यु भएको थियो। यसलाई पछि गएर वर्नस्टिनले कब्जा गरे। त्यस पछि यस्को नेतृत्व काल उत्स्कीका हातमा पुग्यो।

तेश्रो अन्तर्राष्ट्रिय कम्युनिष्ट संगठन :— "तेश्रो अन्तर्राष्ट्रिय" सन् १९१९ मा लेनिनको नेतृत्वमा गठन भएर १९४३ सम्म रह्यो।

## ७३. कोमिन्फर्म :—

कम्युनिष्ट इन्फर्मेशन व्यूरो। सन १९४३ पछि फेरी अन्तर्राष्ट्रिय कम्युनिष्ट संगठन बनेन। त्यस पछि स्टालिनको नेतृत्वमा सन १९४७ मा "कोमिन्फर्म" अर्थात कम्युनिष्ट अन्तर्राष्ट्रिय सूचना केन्द्र व्यूरोकेही समय चल्यो। यसमा रूस, पोल्याण्ड रूमानिया हंगेरी बुल्गारिया, युगोस्लाविया, चेकोस्लावाकिया, फ्रान्स, इटालीका कम्युनिष्ट पार्टीहरू सामेल भए। साम्यवाद विरोधी प्रचारको सामनागर्न यसको स्थापना गरिएको थियो। सन १९५७ जनवरीमा यसको पनि विधिवत विघटन भयो।

## ७४. कार्यक्रमः–

सानो वा ठूलो राष्ट्रिय वा अन्तर्राष्ट्रिय संघ वा संगठनहरूले निश्चित अवधिका लागि प्रस्तुत गरेको कामको सिलसिलाबद्ध रूपरेखा लाई कार्यक्रम भनिन्छ। कार्यक्रम खास गरेर राजनैतिक संगठनहरुका लागि विशेष सान्दर्भिक रहेको हुन्छ। कुनै पनि राजनैतिक संगठनको प्रमुख परिचायक अन्तर्वस्तु त्यसको कार्यक्रम नै हो सामान्य अर्थमा कार्यक्रम नभएको कुनै संस्था नै हुदैन।

## ७५. कार्यनीतिः—

कुनै पनि संगठन ले घोषित कार्यक्रमलाई लागु गर्न अपनाउनु पर्ने खास कार्यवाहीहरू लाई कार्यनीति भनिन्छ। कार्यनीति पनि कार्यक्रम को अभिन्न अंग हो

## ७६. क्रमिक विकासः—

भौतिक वस्तु तथा सामाजिक जीवनको सुस्पष्ट दिशाबोध एक पछि अर्कोको

निरन्तरता, नियमानुसार हुने परिववर्तन को प्रक्रियालाई क्रमिक विकास भनिन्छ। उत्पादनमा कच्चामाल देखि तयारी माल सम्मको प्रक्रिया। सामाजिक जीवनमा समाजले उपलब्ध गरेका विशिष्ट चेतना र उपलब्धिहरू पर्छन्। प्राणी-हरूमा क्रमिक विकासको सिद्धान्तलाई डार्विनले पत्ता लगाएका हुन्। ऐतिहासिक भौतिकवाद पनि यसै कुराबाट निर्देशित छ।

## ७७. कसौटी:—

कुनै पनि वस्तुको यस्तो विशेषता वा लक्षण जसको आधारमा त्यसको उपादेयता र मूल्याङ्कन परिभाषा र वर्गीकरण गर्न सकिन्छ त्यसैलाई कसौटीं वा निष्कर्ष भन्न सकिन्छ।

## ७८. कॉंग्रेस:—

खास खास राजनैतिक विचारले अभिप्रेरित भएका व्यक्तिहरूको राज-नैतिक अधिवेशन वा सभालाई कांग्रेस भनिन्छ। कहिंकहिं यसको प्रयोग राज-नैतिक पार्टीका लागि पनि प्रयोग हुने गर्छ। यसले खास गरेर पूंजीवादी जनवादी पार्टीहरूलाई जनाउँछ।

## ७९. कार्य—कारण:-

द्वन्द्वात्मक भौतिकवादका परिकल्पनाहरु मध्ये एउटा परिकल्पना। संसारका प्रत्येक घटना वा वस्तुको उत्पत्ति प्रति कुनै न कुनै कारण नभई हुंदैन। कार्य साध्य हो भने कारण साधन हो। वैशेषिक दर्शनका अनुसार कार्य र कारणको मसीनो गरि विवेचना गरेको छ जुन अहिले पनि सान्द-र्भिक छ। जसका अनुसार " प्रागभाव प्रतियोगी कार्यम् " अर्थात पहिल्यै न भएको र अब हुन लागि रहेको कुरालाई कार्य भनिन्छ। कार्यलाई सिद्ध गर्न नभई नहुने कुरालाई कारण भनिन्छ यो ३ किसिमको हुन्छ। १. समवायी कारण, २. असमवायी कारण, ३. निमित्त कारण। १. समवायी कारण :- कार्य संग अक्षुण्ण सम्बन्ध राख्ने कुरालाई समवायी कारण भनिन्छ जस्तै कपडाको लागि धागो संमवायी कारण हुन्छ। २. असमवायी कारण :— कार्य संग जुन कारणको संयुक्तता रहन्छ त्यो असमवायी कारण हुन्छ। कपडा कार्यमा धागो बुनोट अथवा धागो रङ्गाका आधारमा कपडाका रंग आदि त्यसको असमवायी कारण हुन्छ। ३. निमित्तकारण:- कार्यका लागि चाहिने उपकरण र श्रमशक्तिलाई निमित्त कारण भनिन्छ। जस्तै कपडाका लागि तबो बुन्ने तान र मानिस आदि। यसरी कुनै बस्तुमा कार्य र कारणको अटूट अन्त सम्बन्ध रहेको हुन्छ।

## ८०. गति:—

मानवीय चिन्तनको महत्वपूर्ण मोड जुन मोडले वस्तुलाई सञ्चालन गर्ने कुनै कुनै बाहिरी तत्व (ईश्वर) छ भन्ने मान्यतालाई खण्डन गरि दियो। गति भन्नाले भौतिक वस्तुको अन्तरक्रिया द्वारा वस्तुको अस्तित्व मान अवस्था। गति २ किसिमका हुन्छन १. निरपेक्ष गति २. सापेक्ष गति, निरपेक्ष गति भन्नाले वस्तुको अस्तित्व र सापेक्ष गति भन्नाले एक आपसमा सिर्जित गतिका विविध रूपहरू। यस प्रकारको गति फरक फरक वस्तुमा फरक फरक किसिमले अभिव्यक्त हुन्छ। गतिका उच्चतम रुपहरू न्यूनतम रूप भन्दा गुणात्मक किसिमले नै फरक हुन्छ। गतिले यसरी फड्कोमारे पछि त्यसलाई पुरानै अवस्थामा ल्याउन सकिदैन। समाज विकासका सन्दर्भमा उत्पादक शक्तिको गति शीतलताले सिर्जित भएको साम्यवादी अवस्था पछि फर्केर आदिम साम्यवदमा फर्कन सक्दैन।

## ८१. गुण:—

एक वस्तुलाई अर्को वस्तु देखि फरक पार्ने वस्तुको विशेषता जनाउने कुरालाई गुण भनिन्छ। अर्थात वस्तुको मौलिक विशेषता नै गुण हुन्छ।

## ८२. गुणात्मक परिवर्तन:—

वस्तुका विकास प्रक्रियामा देखिने आवश्यक परिमाणलाई गुणात्मक परिवर्तन भनिन्छ। पानी १०० डिग्री तताउँदा वाफ हुन थाल्छ र शून्य डिग्री चिसो हुदा जम्न थाल्छ। यसरी दुवै अवस्थामा गुणात्मक परिवर्तन हुन्छ। सामाजिक जीवनका सन्दर्भमा उत्पादक शक्तिमा क्रमशः संख्यात्मक विकास हुंदै गए पछि गुणात्मक परिवर्तन आउँछ। फलस्वरुप क्रान्ति भएर समाज एउटा अवस्थाबाट अर्को अवस्थामा पुग्छ। क्रान्ति भन्दा पहिलो गुणात्मक परिवर्तन आउँछ। उत्पादक शक्तिको पूर्ण विकास हुनुका लागि उसको विकासका लागि वाधक बनेका पुराना उत्पादन सम्बन्धहरुलाई तोडनु पर्ने हुन्छ; त्यो काम क्रान्तिले मात्र गर्न सक्छ। यसलाई समाजको गुणात्मक परिवर्तन भनिन्छ।

## ८३, गान्धीवाद:—

सामन्त वर्ग र किसान, पूंजीपति वर्ग र सर्वहारा बीचको अन्तर्विरोधलाई अस्वीकार गर्ने, वर्गगत, नीतिगत र सैद्धान्तिक मत विरोधलाई आध्यात्मिक भावुकताले सामन्जस्य ल्याउन खोज्ने, पूंजीपतिलाई समाजको आर्थिक कारोवार गर्ने जिम्मेबार वर्ग ठान्ने, प्रतिक्रियावादीका आक्रमण र उत्पीडनलाई सहन लगाउने तथा पुरानो सामन्ती परिपाटी (रामराज्यको सपना) लाई

पुन स्थापना गर्न खोज्ने सिद्धान्लाई गान्धीवाद भनिन्छ।

८३. गणतन्त्र:-

पुख्यौंली उत्तराधिकारीबाट चल्ने राजतन्त्रको सट्टा जनताले नैं चुनेका व्यक्तिद्वारा देशको सर्वोच्च शासक अर्थात राष्ट्रपति ( राष्ट्राध्यक्ष ) व्यवस्थालाई गणतन्त्र भनिन्छ। भारत, फ्रान्स, स्विजरलैण्ड, आदिमा गणतन्त्रात्मक व्यवस्था भनिन्छ। गणतंन्त्र भन्नाले सामान्य रुपमा राजतन्त्र र सैनिक शासन न भएको पूंजीवादी प्रजातन्त्र भएको अवस्था बुझिन्छ। मजदूर, किसानको प्रतिनिधित्व भएको यस्तो संस्थालाई जनवादी गणतन्त्र भनिन्छ।

"च"

८५. चेतना:—

दर्शन, समाज विज्ञान, तथा मनोविज्ञान क्षेत्रको प्रमुख प्रतिपार्थ विषय। वस्तुगत आधारबाट ज्ञानको उत्पत्तिमा देखिने मानवीय क्षमतालाई चेतना भनिन्छ। मार्क्सवादी दर्शनमा चेतनाको अर्थ – सुसंगठित भौतिक वस्तुको एक अनुगुण अर्थात् वस्तुगत जगत्‌को आत्मगत प्रतिविम्बलाई चेतना भनिन्छ। चेतना २ किसिमको हुन्छ। १. समष्ठि चेतना २. व्यष्टि चेतना। समष्टि चेतना भनेको कुनै समाजमा देखा पर्ने विज्ञान, दर्शन, कला, साहित्य, सामाजिक नैतिकता, धर्म, राजनीति र विधि-विधानको समष्टि रूप हुन्छ भने, व्यष्टि चेतना व्यक्तिको मनस्थिति, रुचि, क्षमता, भावना, ज्ञान र इच्छा-शक्तिको कुल योगलाई भनिन्छ।

८६. चिन्तन:—

मानवीय ज्ञानको एउटा प्रक्रिया; वाद, प्रतिवाद सम्वाद, सम्वाद भन्दा अधिवाद र प्रतिवादको सोचाईको श्रृङ्खला चिन्तन हो। मानस पटलमा पर्ने वस्तुगत वास्तविकताको उच्चतम परिवर्तन प्रक्रियालाई चिन्तन भन्दछन्। यस प्रक्रियाले मानिसलाई वास्तविक जगतका गुण अनुगुणहरू, सम्पर्क र सम्बन्धहरू, नियमहरू जान्न बुझ्न सक्षम बनाउँछ। सामाजिक, ऐतिहासिक, दैनिक एवं व्यावहारिक क्रिया कलापहरुसंग चिन्तन अभिन्न रूपले जोडिएको हुन्छ।

८७. चैतन्य:–

मानिसको जागृत गुण। अध्यात्म शास्त्रमा ईश्वरलाई पनि चैतन्य भनिन्छ।

"ज"

८८. जनता:–

देश, काल, परिस्थितिका आधारमा 'जनता' शब्दको अर्थ, फरक

फरक हुन्छ। हाम्रो जस्तो अर्ध सामन्ती, अर्ध औपनिवेशक देशमा सामन्तवाद, नोकरशाही, दलाल पूंजीवाद र साम्राज्यवादको विरोध गर्न तथा कम्तिमा उनीहरूबाट शोषित नौलो जनवादी क्रान्तिको पक्षमा उभिने या समर्थन गर्ने या विरोध नगर्ने विभिन्न वर्ग वा वर्ग स्तरका मानव समुदायलाई जनता भनिन्छ। जनता नै उत्पादनका साधन बनाउने, तिनको प्रयोग गर्ने र बिकास गर्ने शक्ति हुन, त्यसैले इतिहास निर्माता हुन। विकासका पांग्रालाई पछाडि धकेल्ने प्रतिक्रियावादीं गुटलाई जनता मानिदैन। साम्राज्यवादी वा अन्य घरेलु प्रतिक्रियावादको विरोध नगरे पनि तिनीहरुबाट शोषितहरूलाई जनता भनिन्छ।

## ८९. जनपक्षीय:—

समकालीन प्रतिक्रियावादी व्यवस्थाका विरूद्ध जनताका मौलिक अधिकारहरू गास, वास, कपासको परिपूर्ति वाक् स्वतन्त्रता संगठन गर्ने स्वतन्त्रता जस्ता आधारभूत कुरा लिएर जनताको अग्रपङ्क्तिमा अगाडि बढ्ने सचेत सुसंगठित समुदायलाई जनपक्षीय भनिन्छ। अचेल यो अन्तर्राष्ट्रिय स्तरमा पनि प्रगतिशीलताका पक्षपातीहरूलाई मान्न थालिएको छ।

## ९०. जनवादी केन्द्रियता:-

कुनै पनि राजनैतिक संगठन खास गरेर कम्युनिष्ट पार्टीलाई सुसंचालन गर्ने महत्वपूर्ण अधिनियमलाई जनवादी केन्द्रीयता भनिन्छ। यसको पूर्ण पालना न गर्ने हो भने कम्युनिष्टहरू आफ्नो उद्देश्य प्राप्त गर्न सक्दैनन्। जनवाद भनेको कार्यकर्ताहरुको मर्यादित रूपमा आलोचना छलफल गर्न पाउने अधिकार हो भने केन्द्रीयता उच्च संगठनका अधिसुचनाहरूलाई पालना गर्नु पर्ने मर्यादित अनुशासन भन्ने बुझिन्छ।

## ९१. जनवादी (व्यक्तिको अर्थमा):—

मार्क्सवाद – लेनिनवाद सर्वहारा अन्तर्राष्ट्रवाद प्रति शत्रुतापूर्ण व्यवहार नदेखाउने (या यसलाई समर्थन गर्ने) घरेलु प्रतिक्रियावाद र निरंकुशताको विरोध गर्ने र जनतामाथि गरिएका शोषण उत्पीडन र दमनको विरोध गर्ने र जनताका साथ न्यायपूर्ण संघर्षको समर्थन गर्ने व्यक्तिलाई जनवादी भनिन्छ।

## ९२. जातिवादी:—

कुनै जातिलाई ठूलो बताई उसको विशेषाधिकारका निम्ति गरिने कुनैपनि प्रयासलाई जातिवाद भनिन्छ। हिटलरले जातिलाई संसारको सर्वश्रेष्ठ आर्य जाति भनी विश्वभरीं उसको प्रभुत्व देखाउन खोजेकोथियो। अहिले इजरायलीहरू पनि यहूदीवादी घमण्डले चूर छन्। वर्ग व्यवस्था भएको समाजमा ब्राह्मणबाद पनि जाति

वादको रुपहो। यसरीनै दक्षिण अफ्रिकी सरकारले जातिवादी आधारमा त्यहाँका काला जाति प्रति निर्मम र अत्याचार गरी रहेका छन् र यो एउटा ज्वलन्त उदाहरण हो।

## ९३. (संयुक्त पुँजी कम्पनी) :-

ज्वाईट स्टकलाई 'संयुक्त पूजी' भन्न सकिन्छ। ट्रास्ट जस्ता ठूला ठूला पूँजीवादी संस्थाहरूमा भित्र हानथाप भएर एउटा संस्थाले अरू संस्थालाई पछार्न थालेपछि यौटा ठूलो केन्द्रिकरणको आवश्यकता पर्न जान्छ र अनेकौ कम्पनी तथा पूँजीपतिहरू संयुक्त भएर कुनै खास किसिमको उद्योगको एउटै ठूलो ज्वाईट स्टाक कम्पनी स्थापना हुन्छ। सन् १८९० मा बेलायतका ४८ वटा नून उत्पादन कारखाना एउटै कम्पनीमा मिलेर ठूलो ज्वईट स्टाक कम्पनी बनेको थियो। यसले राज्यको उत्पादन र यातायातमाथि कब्जा गरेको थियो। पछि स साना ट्रस्टहरुलाई आफूमा विलीन गर्‍यो।

## ९४. जड सूत्रवाद:—

कुनै पनि वस्तुभित्र हुने अनिवार्य गतिलाई अस्वीकार गर्ने विचार नै जड सुत्र वाद हो। यो विचारले वस्तुको परिवर्तन वा विकासलाई एउटा ईश्वरीय देन हो भन्छ अर्को अर्थमा आफना मान्यतालाई जहिले पनि ठीक हुन भन्ने धारणाबाट निर्देशित कार्यप्रणाली पनि जड सूत्रवादी कार्य प्रणाली हो। त्यसैले यो विचार द्वन्द्व-वादको ठीक विपरित छ।

## ९५. जन गणतन्त्र:—

जुन देशमा सामन्तवर्ग, सैनिक तानाशाह धार्मिक नेता पूँजीपति वर्गको शासन न रही मजदूर, किसान आदि श्रमजीवी वर्गको संयुक्त शासन कायम हुन्छ, त्यस्तै व्यवस्थालाई जन गणतन्त्र भनिन्छ। चीन, उत्तर कोरिया आदिलाई जन गणतन्त्र भनिन्छ।

"ट"

## ९६. ट्रष्ट:—

कार्टेल र सिडिकेट भन्दा यो अझ ठूला पूँजीपतिहरूको संख्या हो। यसमा उत्पादन र मूल्यको पूर्व निर्णय गरिन्छ र उत्पादन नियमित हुन्छ। यसमा पूँजीपतिहरूले आ-आफ्नो अलग अलग स्वतन्त्रता गुमाइ सकेका हुन्छन् तथा उत्पादनका साधनहरु विशेष उन्नत र विकसित खालका हुन्छन्।

"द"

## ९७ दर्शन:—

(जीवन र जगतको सामान्य नियमहरूको अध्ययन दर्शन हो) 'दर्शन'

शब्दको साधारण अर्थ (हेर्नु भन्ने हुन्छ।) यसको व्यापक अर्थ 'हेर्न खोज्नु र बुझ्नु' हुन्छ। विश्वको उत्पत्ति कसरी भयो? पृथ्वीमा जीवजन्तु र मानिसको उत्पत्ति कसरी भयो? जगत र जीवनलाई चलाउने शक्ति या नियमहरु के हुन्? भविष्यमा विश्वको स्थिति के हुनेछ? आदि विषयहरूको खोज व्याख्या र दृष्टिकोणलाई दर्शन भनिन्छ। आज संसारमा धेरै प्रकारका दर्शन देखिए पनि मुख्यतया दर्शन २ प्रकारका छन् – एक थरी चेतनालाई आदि तत्व या मूल तत्व मानेर जगतलाई त्यसका स्वतः स्फूर्त रचना मान्ने आदर्शवादी र अर्को पदार्थलाई मूल तत्व- र त्यसको विकसित रूप चेतना मान्ने भौतिकवादीहरु। अरू सबै नामका दर्शनहरू यिनै दुई दर्शनमा गाभिन पुग्दछन्। साना तिना प्रवृत्तिगत मतभेदमा फरक देखिएता पनि सिङ्गो रूपमा यी दुई भन्दा छुट्टा तेस्रो खालको कुनै दर्शन छैन।

पुराना समयका र नयाँ समयका दर्शनको भेद मार्क्सले यसरी गर्नु भएको छ – 'आज सम्म सबै दर्शनहरूले संसारको व्याख्या मात्र गर्दै आएका छन्, तर अव दर्शनको संसारलाई बदल्नु (फेयर बाख सम्बन्धी प्रस्थापना–११)

९८. द्वन्द्ववादः–

विश्व ब्रह्माण्डका सारा चीजहरू दुई परस्पर विरोधी तत्व या कुरा मिलेर बनेका हुन्छन्। तातो र चिसो, हलुङ्गो र गह्रुङ्गो' उल्टो र सुल्टो, झुटो र साँचो, तान्नु र घचेटनु, धन र ऋण, धनी र गरीब जस्ता उल्टा उल्टा स्वभाव भएका कुरालाई परस्पर विरोधी कुरा भनिन्छ। तातो नभई चिसो र धनी नभई गरीब हुन सक्दैनन। त्यसैले संसारमा जहाँ पनि विरोधी कुराहरू संगसंगै गाँसिएका हुन्छन। यस रूपमा विश्व स्वसञ्चालित छ भनी सावित गर्ने वैज्ञानिक सिद्धान्तलाई द्वन्द्ववाद भनिन्छ।

संसारका सबै कुरा भित्र आपसी द्वन्द्व (संघर्ष या टक्कर) चलिरहेको हुन्छ। यसै द्वन्द्वले नै हरेक कुराको जीवन (अस्तित्व) बनेको छ र हरेक कुरा गतिशील, विकासशील र परिवर्तनशील छन्। स्थिर या संधैं एकनास रहने कुरा संसारमा केही छैन। सारा संसारको स्वभाव (प्रकृति) नै द्वन्द्वात्मक छ। संसारको सृष्टि स्थिति लय गर्ने शक्ति ईश्वर नभए बस्तु भित्रकै स्वभाव हुनाले संसार स्वचालित छ। 'संसार शब्दको अर्थ हो संसरणशील अर्थात् हिंडिरहने अघि बढि रहने।' जगत' शब्दको अर्थ हो गतिशील। गति र संसरण द्वन्द्वात्मक क्रिया हुन्, अतः संसार (विश्व ब्रह्माण्ड) द्वन्द्वात्मक छ। यही द्वन्द्वात्मकताको सिद्धान्तलाई द्वन्द्ववाद भनिन्छ।

९९. द्वन्द्वात्मक भौतिकवाद:—

यो शब्दावलि 'द्वन्द्ववाद र भौतिकवाद' मिलेर बनेको हो: द्वन्द्ववादी दृष्टिकोण अनुसार यस सिद्धान्तले जीवन र जगतका सबै वस्तुहरू र सामाजिक घटनाहरूलाई हेर्दा परस्पर विरोधी तत्वका एकता र संघर्ष (गतिशीलता) को नियम, मात्राका विकासबाट गुणमा फड्को हाल्ने (विकासशीलताको) नियम र पुरानोलाई नयाले पराजित गर्ने या 'निषेधको निषेध' को नियमका आधारमा हेर्दछ; र भौतिकवादी दृष्टि अनुसार दर्शनशास्त्रका मुख्य सवालहरूमा भौतिक पदार्थलाई प्रथम स्थान दिन्छ। सृष्टिको आदि र अविनाशी तत्व पदार्थलाई मान्दछ। समाज विकासको क्रममा आर्थिक अवस्था अर्थात उत्पादन पद्धतिलाई प्रथम तत्व मान्दछ र सामन्तवाद तथा पूंजीवादको क्रमशः पतन हुंदै समाजवाद र साम्यवाद तर्फ संसार लम्कने कुरालाई मान्दछ।

१००. दक्षिण पन्थी:—

दक्षिणपन्थी भनेको राजनीतिमा यथा स्थिति चाहने एउटा विचार श्रृखला हो। जस्ले कुनै परिस्थितिमा आएका केही साना तिना कुराहरुमा सुधार मात्र पर्याप्त भन्दछ। यस्तै विचारधारा वा व्यक्तिलाई दक्षिण पन्थी भनिन्छ।

१०१. दुराग्रह:—

विज्ञान तथा विभिन्न तर्क प्रमाणहरूले असत्य सावित गरि सके पछि पनि आफ्नो स्थापना प्रति अडिक रहन खोज्नुलाई दुराग्रह भनिन्छ। यसले मानिसको अज्ञानता र असक्षमतालाई नै साबित गर्दछ।

१०२. दलाल पूंजीपति:—

विदेशी पूंजीपति वर्गसंग साँठ गाँठ गरि उनीहरूको उद्योग र व्यापारलाई फाइदा पु-याउने कामकालागि कमिशनबाट नाफा कमाउनेलाई पूंजीपति भनिन्छ। नेपालमा विदेश, खासगरी बिदेशका माल सामानका व्यापारको ठेकेदार (स्टकिष्ट या आढती) बनेका ठूला ठूला नेपाली पूंजीपतिहरु दलाल पुंजीपति हुन्। यसका साथै बिभिन्न साम्राज्यवादी श्रोतहरुबाट पालिएका व्यवसायी र बुद्धिजीवीहरू एवं साम्राज्यवाद र विस्तारवादका समर्थक नेता' कार्यकर्ता वा बुद्धिजीवीहरू पनि दलाल पूंजीपति वर्गको सेवकमा पर्दछन्।

१०३. देश:—

देश भनेको निश्चित सीमाना भएको त्यस्तो भूभाग हो जसमा एक या अनेक जात जाति या धर्मको संगठित जनसमूह हुन्छ। यो राष्ट्रको पर्यायवाची शब्द नभएर त्यसको पूर्वाधार हो। राष्ट्र भन्दा पहिल्यै देशको रूपमा संगठित हुनु अनिवार्य हुन्छ।

## १०४. देशभक्त:—

साम्राज्यवाद विस्तारवाद र सबै खाले उपनिवेशवादको विरोध गर्ने देशको सार्वभौमिकता, राष्ट्रिय अर्थतन्त्रको पक्ष लिने जततालाई देशभक्त भनिन्छ।

## १०५. दास:—

दासकालिन समाज व्यवस्थाको मुख्य उत्पादक शक्ति: आदिम साम्यवादी समाज विघटन भएर वैयक्तिक सम्पत्तिको प्रादुभाव भए पछि विजेता वर्गले विजित वर्गलाई दास बनाउने प्रथा चल्यो। आज संसारका जति पुराना आश्चर्यका कुरा देखिन्छ र सुनिन्छ ती सबै दासहरूले नै निर्माण गरेका हुन्छन्। रोमन सभ्यताका अवशेष, मिश्रका पिरामिड, चीनको पर्खाल आदि लाखौंलाख दासहरूले निर्माण गरेका हुन्। भारतीय परिवेशमा दासहरूको वर्गीकरण नारदीय सुक्तले यस प्रकार गरेको छ।

दासहरू १३ किसिमका हुन्छन् –

१. वंश परम्परागत दास, २. किनेर ल्याएको दास, ३. उपहार या दाईजो पाएको दास, ४. अकालमा पालेर बनाईएको दास, ५. स्वामीको अहित गरेर भएको दास, ६. ऋण तिर्न नसकेर भएको दास, ७. युद्धमा जितेर ल्याईएको दास, ८. म तपाईको भएँ भनेर शरणागत दास, ९. आफूलाई बेच्न चाहने दास, १०. मालिकको भक्ति गर्ने दास, ११. संन्यास लिएर छोडेको दास, १२. अनाथ भएर हिंडेको दास, १३. घोडा संग साटेको दास।

## १०६. दासयूग:—

आदिम साम्यवादी युग विघटन भएपछि समाजमा दुइ थरीका मानिस हरु देखा पर्न थाले एकथरी धूर्त, कपटी, अल्छि र अर्कोथरी निमुखा, सोझा, परिश्रमी। यी पहिला थरीका मानिसहरुको जमातले दोस्रो थरीका मानिसहरू लाई कमारो नोकर बनाएर आफू उनिहरूका मालिक (स्वामी) बने। अब समाजमा दुइटा वर्गहरू देखा परे एउटा उत्पादनका साधन (जग्गा जमीन) को मालिक र अर्को ती भूपतिहरुको दास। यस युगलाई दास युग भन्दछन्।

## १०७. दु:स्साहसबाद

दुश्मनको ठुलो शक्तिलाई कम मूल्यांकन गरी आफ्नो सानो शक्तिद्वारा कम तयारी गरेरै जित्ने आँट गर्नु दुस्साहसवाद हो। आफ्नो क्षमता शक्ति भन्दा पनि ठुलो काम गर्न आँटगर्नु लाई पनि दु:स्साहसवाद भनिन्छ।

" ध "

## १०८. धर्म :-

शाब्दिक रूपमा धर्म भनेको मानव, अन्य प्राणी अथवा वस्तुले धारण गरेको विशेषता हो। सैद्धान्तिक रुपमा व्यापक अर्थ लगाउदा जीवन र जगत लाई कुनै खास देश काल परिस्थितिमा अगाडि बढाउनका लागि अपनाईने वैचारिक धारणा र व्यवहारलाई नै धर्म मान्नु पर्ने हुन्छ। जंगली समाज वाट अगाडि बढे पछि धर्मको उत्पत्ती हुदाँ यसले प्रगतिशील भूमीका खेलेको थियो। तर समाज विकासको क्रममा यसले अज्ञानता अवैज्ञानिकताको दमन नछाडे पछि यसले प्रतिक्रियावादी भूमिका खेल्न थाल्यो। आजभोली व्यवहारिक रूपमा धर्मले आफ्नो जुन रुप देखाएको छ। त्यस अनुसार धर्म भनेको शोषक वर्गले आफ्नो स्वार्थ पूरा गर्नका लागि जीवन र विश्व ब्रह्माण्डका बारेमा फिजाईएका झुट्टा कल्पना र भ्रमहरूको संगालो हो। कुनै खास देश काल परिथतिमा पनि ग्रहण गरिएका विचारहरूलाई धर्मका रूपमा जुन सुकै देशकाल परिस्थितिमा पनि जस्ता को तस्तै मान्नु पर्ने हुदा धर्म विज्ञानको ठीक उल्टो हुन्छ। सहीलाई गलत, गलतलाई सही सुल्टोलाई उल्टो भन्दछ। सामन्ती र साम्राज्यवादी शोषणबाट उत्पन्न भएको गरिवीलाई पूर्व जन्मका पापको परिणाम भन्छ शोषक वर्गले वनाएका जातपातका भेदलाई ईश्वरले बनाएको भन्दै वकालत गर्छ, गोलो पृथ्वीलाई चेप्टो भन्छ, सूर्यका वरीपरी घुम्ने पृथ्वीलाई अचला भन्दै सूर्यलाई पृथ्वीको वरी परी घुम्ने ग्रह भन्दछ: र यो जन्म र यो लोकको वास्तविकता लाई अस्वीकार गर्दै परलोक र परजन्मका व्याख्यान दिन्छ। यसरी शोषक वर्गको हितका लागि जनतालाई रनभुलमा पार्ने हुदाँ मार्क्सले धर्म लाई 'अफिमको नशा' भन्नु भएको हो। वैमनस्यपूर्ण आर्थिक आधार र त्यसबाट हुने शोषण र उत्पीडनलाई सहन प्राकृतिक र न्यायपूर्ण घोषित गर्दै सहन लगाएर धर्मले शोषक वर्गको पक्ष लिएको देखिन्छ यसका आदर्शहरूका आडमा शोषकहरुले आफ्नो फाईदा लुट्ने गर्छन्।

## १०९. धर्म निरपेक्ष राज्य:—

राज्यले कुनै एउटा धर्मलाई बिशेष मान्यता नदिई सबैलाई समान महत्वको स्वतन्त्रता दिने र धर्मका मामलामा कुनै हस्तक्षेप नगर्ने एवं विधान कानूनमा कुनै धर्मको आड नलिने राज्यलाई धर्म निरपेक्ष राज्य भनिन्छ। चीन, रुस, फ्रान्स, बेलायत आदिले कुनै धर्मलाई पनि विशेष मान्यता नदिएका र कुनै राज्य धर्म पनि घोषित नगरेका हुनाले ती धर्म निरपेक्ष राज्यहरू हुन्।

## ११०. धर्म सापेक्ष राज्य:-

कुनै एउटा धर्मलाई राज्य धर्म घोषित गरी या अरु धर्म भन्दा विशेष ठाउँ दिई विधान कानून आदिमा धेरै रूपमा त्यस धर्मको आड लिने राज्यलाई "धर्म सापेक्ष राज्य" भनिन्छ। नेपालले हिन्दू धर्मलाई, पाकिस्तान, इरान आदिले इस्लाम धर्मलाई राज्य धर्मको मान्यता दिएका या विशेष मान्यता दिएका हुनाले यी तीनै राज्यलाई धर्म सापेक्ष राज्य भनिन्छ।

"न"

## १११. नयाँ जनवाद:-

सामन्तवर्ग र विदेशी साम्राज्यवादीहरूको शोषण र शासनलाई खतम गरी मजदूर, किसान र देशभक्त पूँजीपतिहरूका प्रतिनिधिहरू मिली बहुसंख्यक जनताको हितमा काम गर्ने सरकार बनाउने सामाजिक व्यवस्थालाई नयाँ प्रजातन्त्र वा नयाँ जनवाद भनिन्छ। चीन तथा उत्तर कोरिया आदिमा सामन्तवाद पल्टे पछि र समाजवाद शूरू नभए सम्म बीचका अवस्थामा नयाँ जनवादको स्थापना भएको थियो।

आजको युगमा कृषि प्रधान देशहरूको पूंजीपति वर्ग सामन्तवाद संग साँठगाँठ गर्ने र साम्राज्यवादको दलाली गर्ने भएकोले त्यस्ता देशमा नयाँ जनवाद मात्र स्थापित हुन सक्छ, पुरानो जनवाद स्थापित हुन सक्दैन। त्यस्ता ठाउँमा संसदीय व्यवस्थाको नामबाट पुरानो जनवाद स्थापित गरिएता पनि त्यहाँ बेलायत अमेरिकामा जस्ता पूंजीवादी जनवादी अधिकार पनि जनताले पाउन सक्दैनन्। भारतमा र २००७ देखि २०१७ सम्मको नेपालमा संसदीय व्यवस्थाका नामवाट जुन देखा परे ती नाम मात्रका पूंजीवादी प्रजातन्त्र हुन। तिनले भारत र नेपाललाई आधुनिक समाजवादको त कुरै छाडौं वेलायत–फ्रान्सको जस्तो पूंजीवादी खालको विकासको अवस्थामा पनि पु-याउन सक्दैन। तिनले सामन्तवाद दलाल पूंजावाद र साम्राज्यवादलाई मात्र मिटाउन थाल्छन्। त्यसले नेपाल र भारत जस्ता देशमा अब हुने क्रान्तिमा जनवाद स्थापना गर्नको निम्ति हुनेछ।

## ११२. नाजीवाद:—

नेशनल सोसलिष्ट पार्टी को संक्षिप्त रुप Natse हो-जो हिटलरको पार्टी थियो। अन्धजातिवादी तथा हत्या र आतङ्कको सैनिक अधिनायकत्व उसको संस्थापन र सञ्चालन जर्मनीका हिटलरले गरेका थिए। त्यसै पार्टीको नेतृत्व र विचारधाराका आधारमा द्वितीय विश्व युद्धलडिएको थियो।

## ११३. निम्न पूँजीपतिः—

सानो तिनो नोकरी, व्यापार कालींगडी प्राविधिक काम आदिबाट आजको सानो पूँजीले सामान्य खालको जीवन गुजारा गर्नेलाई निम्न पूंजीपति भनिन्छ। हाम्रो देशका साना सरकारी कर्मचारी र प्रविधिहरू, निंजी पसल चलाउने, कालीगड र साना व्यापारीहरू, माध्यमिक विद्यालय सम्मका सामान्य शिक्षकहरू क्याम्पसका सहायक प्राध्यापक स्तर सम्मका शिक्षकहरू सामान्य कलाकार, पत्रकारहरू आयका हिसाबले निम्न पूंजीपति वर्गमा पर्दछन्।

## ११४. निम्न पूँजीवादः—

क्रान्ति प्रति ठूलो आकांक्षा राखेर पनि थोरै नै भए पनि व्यवहार-मा जान न खोज्ने, कठोर धैर्यतापूर्ण र बलिदानपूर्ण कामलाई केन्द्रित गरेर हेर्न नसक्ने, व्यक्तिगत वीरता र साहसका कामलाई ठूलो देख्दै राजनैतीक लाइनलाई महत्वपूर्ण रूपले हेर्न नसक्ने आदि धेरै थरीका कमजोरीहरू भएको निम्छरो मनोवृत्तिलाई निम्न पूँजीवाद भनिन्छ। यस्को केही लक्षण हुन-शक्तिको गलत मूल्यांकन, एकपक्षिय दृष्टि, कूपमण्डुकता, संङ्कीर्णता, आत्मवल र आत्मविश्वास को अभाव, व्यक्तिनिष्ठता र व्यक्तिवाद आदिवाट पनि यसको अभिव्यक्ति हुने गर्छ।

## ११५. नोकरशाहः—

आफू भन्दा माथिकालाई ढोग्दै हिडने र तलकालाई लत्याउँदै हिडनें या दमन गर्नेहरूलाई नोकरशाह भनिन्छ। नोकरशाहहरूमा कुनै प्रजातान्त्रिक र प्रगतिशील भावना र व्यबहार हुंदैन। तिनीहरु त्यसका कट्टर विरोधी हुन्छन्। नोकरशाहहरू गाउँ जिल्ला तथा राष्ट्रदेखि अन्तर्राष्ट्रिय स्तरसम्मका हुन्छन्।

## ११६. नश्लवाद;—

यो जातिवाद जस्तै हो। नश्ल, गोरा, काला, अग्ला, पुड्का आदि नश्लको आधारमा गरिने भेदभावलाई नश्लवाद भनिन्छ।

## ११७. निर्दलीय व्यवस्थाः—

जनतालाई कुनै राजनैतिक संगठन या दल खोल्नु र चलाउन नदिइने व्यवस्थालाई निर्दलीय व्यबस्था भनिन्छ। निरंकुश सामन्ती व्यवस्थामा र धेरै जसो सैनिक शासनमा पनि यस्तै निर्दलीय व्यवस्था रहन्छ। यसले सामन्त दलाल नोकरशाह पूँजीपतिको र विदेशी पूँजीपतिको रक्षा गर्दछ। पाकिस्तानको अयूवखाँले पनि वेसिक डेमोक्रेसीका रूपमा निर्दलीय व्यवस्था कायम गरेको थियो। यस्तै अन्य कतिपय देशहरुमा पनि प्रजातन्त्रको नाम अगाडि राखेर निर्दलीय व्यवस्था लागु गरिएको हुन्छ।

## ११८. नियमः–

प्रकृति र समाजका विभिन्न घटनाका प्रक्रियाहरूमा आपसी सम्बन्ध रहेको हुन्छ अथवा विभिन्न घटनामा एउटै क्रिया बारम्बार दोहोरिने क्रिया तथा विभिन्न घटनाहरूका बीचको आपसी सम्बन्धलाई नियम भनिन्छ । खास – खास वस्तुहरूको विकास गर्न तथा खास किसिमका समस्याहरुलाई हल गर्न खास किसिमको नियमले काम गर्दछन् । समग्र घटनामा व्याप्त नियमलाई आम या सामान्य नियम र खास पक्षसंग सम्बन्धित नियमलाई ठोस या विशेषलाई पनि नियम भनिन्छ ।

## ११९. नोकरशाह पूंजीपतिः–

आफ्ना नाता सम्बन्ध र ओहोदाका शक्तिको नाजायज फाईदा उठाई गिफ्ट पार्सल, घूस, नजराना, कोटा र लाईसेन्स बिक्री जस्ता भ्रष्टाचारी तरीका बाट पूंजी बटुल्नेहरुलाई नोकर शाह पूंजीपति भनिन्छ ।

## १२०. नैतिकता :—

समाजमा मानिसहरूको चाल चलन सम्बन्धी नियमहरू वा मर्यादाहरूका सामान्य धाराहरुको समूह लाई नैतिकता भनिन्छ । यमले कुनै देशकाल परि–वेशमा न्याय र अन्याय, सत्कार्य र दुष्कार्य, सदाचार र दुराचार ईत्यादिको नि–रूपण गर्दछ ।

## १२१. निरङ्कुशता :–

जुन देशमा सत्ता प्रमुखको ईच्छा र आदेश नै विधान र कानून हुन्छ । लिखित संविधान र विधिनियमहरू पनि सत्ता प्रमुख कै ईच्छा अनुसार सजिलै हेर फेर गर्न सकिन्छ त्यस्तो शासन व्यवस्थालाई निरङ्कुशता वा निरङ्कुशतन्त्र भनिन्छ सत्ता प्रमु-खलाई नियन्त्रणमा राख्ने कुनै किसिमको अँकुश विधि विधान नभएका हुनाले त्यस्ता लाई निङ्कुश भनिएको हो

## १२२. नव उपनिवेशः–

पुरानो जमानामा साम्राज्यवाद आफै नैं अर्काको देशमा गएर शासन सत्ता चला-उँथ्यो । समयको गतिसँग-सँग कै यस्तो काम अत्यन्त निन्दनीय भएको हुदा आजभोली साम्राज्यवाद ले अरुदेश मा अप्रत्यक्ष रूपमा शासन, अर्थ व्यवस्थालाई नियन्त्रण गर्ने चलन भएको हुदाँ यस्तो तरीकालाई नव उपनिवेशवाद भनिएको हो ।

## १२३. निरपेक्षता :-

सापेक्षको उल्टोलाई निरपेक्ष भनिन्छ । कुनै पनि कुरालाई देश, काल परिस्थिति आदिको तुलनामा ननापी सदा सर्वत्र एकै नासे बनी बनाउ मापदण्डले नाप्नु, भदौमा आँखा फुटेको गोरूलाई सधैं हरियो भने जस्तो धाराण राख्नु निरपेक्षता हो ।

## १२४. नाटो

नर्थ एटलाटिक ट्रिटि अर्गनाइजेशन ( उत्तर एटलांटिक सन्धि सङ्गठन ) रूस द्वारा हुने साम्यवादी खतरा बाट बचाउन पश्चिमी देशहरूले १९४९ सन्‌मा वासिङ्गटनमा यो सन्धिमा हस्ताक्षर गरेका हुन । अमेरीका, ब्रिटेन, क्यनाडा, फ्रान्स, हल्याण्ड वेल्जियम लग्जेमवर्ग यस सन्धिका संस्थापक सदस्य थिए । ईटली, नर्वे आइल्यण्ड, डेन्मार्क, पुर्तगाल, तुर्की, प. जर्मनी, पछि सम्मिलित भएका हुन । मुख्य कार्यालय पेरिस । फ्रान्स १९६६मा यस संगठन बाट अलग भयो ।

## १२५. निर्णय :—

प्रस्तुत गरिएका विचारहरु प्रति व्यक्ति वा समुहको गम्भीर अडानलाई निर्णय भनिन्छ । छलफलका क्रममा देखिएका विचारहरू नै निष्कर्षमा पुग्दा निर्णयको रूप लिन थाल्छन् ।

## १२६. नीति :—

सामाजिक जीवनमा मनिसले अपनाउनु पर्ने आचार संहिताहरूलाई नीति भनिन्छ । अथवा मानिसले आफ्नो उद्धेश्य प्राप्तीका लागी गर्नु पर्ने तमाम आचार हरू नै नीति हरू हुन ।

## १२७. निलम्वन :–

तोकिएको सीमा र त्यसको उद्देश्य विपरीत काम गर्न खोज्ने व्यक्तिला सम्वन्धित समुदाय देखि वञ्चित पार्नुलाई निलम्वन भनिन्छ । राजनैतिक अर्थमा निल म्वन भनेको घोषीत लक्ष र कार्यक्रम अनुरुप चल्न नचाहने व्यक्तिलाई सम्वन्धित पद बाट केही समयका लागि बाहिर राख्नु हो ।

## १२८. न्याय :–

प्रमाण हरूका आधारमा सत्य तथ्य पत्ता लगाउनु लाई न्याय भनिन्छ । न्याय दर्शनले सम्पुर्ण प्रमाणहरूको विवेचना गर्छ प्रचलित अर्थमा न्याय भनेको सही र गलतका वीच यथार्थ के हो त्यो छुट्याउनु पनि हुन्छ । यसैलाई प्रमाणै अर्थ परीक्षणं न्यायः" अर्थात प्रमाणहरूको आधारमा सत्य तथ्य पत्ता लगाउनु लाई पनि न्याय भनिन्छ ।

## १२९ निष्ठा :–

कुनै मत, सिद्धान्त, धर्म, आस्था प्रति मानिसको इमानदारी पूर्ण लगन शीलता लाई निष्ठा भनिन्छ । जुन सुकै सिद्धान्त मा चल्ने व्यक्ति किन नहोस निष्ठा अवश्य चाहिन्छ

## १३०, नास्तिकता:—

परलोक; पुनर्जन्म, परमेश्वर, पुपुरो र परम्परा प्रति बिस्वास नगर्ने विचार-धारा लाई नास्तिकता भनिन्छ ।

"प"

## १३१. प्रजातन्त्र :—

( जनबाद ; लोकतन्त्र; जनतन्त्र, लोकशाही ) जनता द्वारा चुनिएका प्रतिनिधिहरूबाट सरकार बन्ने र जनताको राय सल्लाहबाट देशको सम्पूर्ण व्यवस्था चल्ने परीपाटीलाई प्रजातन्त्र भनिन्छ ।

यसको अर्थ भयो कुनै राजा, धार्मिक नेता या कुनै सैनिक नेताको एकलौटी शासन प्रजातन्त्रमा हुदैन । हुनत आज भोली राजा; धार्मिक नेता या सैनिक तानाशाह आदि जो सुकैले पनि आफ्नो शासनलाई प्रजातन्त्र नै भन्दछन, त्यो सिद्धान्त गलत हो । आजको विश्वमा प्रजातन्त्र भन्नाले खासगरी दुई किसिमका व्यवस्था भन्ने बुझिन्छ । पुरानो प्रजातन्त्र ( गणतन्त्रात्मक ) र नयाँ प्रजातन्त्र ( जनगणतन्त्रात्मक )

## १३२: पुरानो प्रजातन्त्र :—

मुख्य रुपले पूंजीपति वर्गकै स्वार्थ पूरा गर्ने र पूंजीवादी वर्गको नेतृत्व र शासन ( अधिनायकत्व ) चल्ने परीपाटी भएका प्रजातन्त्रलाई पुरानो प्रजातन्त्र या संसदीय प्रजातन्त्र भनिन्छ । पुरानो प्रजातन्त्रमा जनतालाई कानूनी रुपमा बोल्ने, लेख्ने प्रचार गर्ने, सभा संगठन गर्ने, सरकार छान्ने आदि अधिकार दिईएको हुन्छ । तर व्यवहारमा यी सबै कुराको उपोभोग पूंजीवादी वर्गले अर्थात हुंने खाने खलकले मात्र गर्न सक्दछन् , सर्वसाधारण जनताको निम्ति "आकासको फल आंखा तरीमर" मात्रै हुन्छ । यसमा "स्वतन्त्रको मतलब सामन्ती बन्धनबाट स्वतन्त्रता (पूंजीवादी बन्धन बाट होईन) समानता को मतलब कारणमा सबै बराबर (आर्थिक र राजनैतिक व्यवस्थामा होईन ) नेतृत्वको मतलब सामन्ती वर्गको विरूद्ध पूंजीवादी वर्गको नेतृत्वको सबै बराबर ( पूंजोपति र मजदूर को बीचमा होईन ) भन्ने कुरा स्पष्ट "छ लेनिन भन्नु हुन्छ " पूंजीवादी प्रजातन्त्र अल्पमतको प्रजातन्त्र अर्थात धनीहरूको प्रजातन्त्र हो ।" बेलायत, फ्रांस, संयुक्त राज्य अमेरीका आदिमा यस्तै खालको प्रजातन्त्र छ ।

## १३३. प्रजातान्त्रिक समाजवाद :—

ठूलाठूला पूंजीपतिहरूका हातमा देशका सारा उद्योग व्यापार र खेतीपाती को एकलौटी अधिकार हुन नदिने र पुंजीको यौटा निश्चत हदबन्दी गरी उद्योग व्यापार र खेतीपातीमा होड गर्न दिने विचारधारालाई प्रजातान्त्रिक सामजबाद भनिन्छ ।

प्रजातान्त्रिक समजवादी विचारधारा कम्युनिष्ट सिद्धान्तका विरोधमा उठेको हो। यस विचारधाराले पूंजीवादीलाई खतम गर्न हुन त्यसको एउटा हदवन्दि मात्र गर्न चाहन्छ, त्यसैले यसलाई निम्न पूंजीवादी समाजवाद पनि भनिन्छ । उनिहरु समाजमा वर्ग भेद मेटाउन चाहनन् र मार्क्सवादले भने जस्तो समाज बन्न सक्तैन भन्नेकुरा हाकाहाकी प्रचार गर्दन्छ । उनिहरू कम्युनिष्टहरूले स्थापना गर्ने समाजवादमा सबै वर्गले पार्टी खोल्न नपाइने त्यहां समाजवाद मात्र हुन्छ, प्रजातान्त्र हुदैन भन्दछन् र आफूहरु चाइ "हामीसबै वर्गले पार्टी खोल्न पाइने, समाजवादी सुविधा पनि चाहिने समाज बनाउन चाहन्छौं" भन्छन् । वास्तवमा समाजलाई अलि खुकुलो पारी पूंजी व्यवस्थालाई संसारमा कायमै राख्ने उद्देश्यले उनीहरू यसो भनेका हुन् ।

## १३४. प्रभूत्ववाद :—

सम्पूर्ण विस्वमा मालीक्याई ( प्रभुत्व ) जमाउन ठूलाठूला आणविक अस्त्र–शस्त्रहरूको होड चलाएर जल, थल र आकाशमा समेत सैनिक तथा जासूसी केन्द्रहरु खोलेर चौतर्फी रूपमा हमला गर्ने नीति अपनाउने देशलाई प्रभुत्ववादी भनिन्छ । यो साम्राज्यवादकै उग्ररूप हो जस्ले साम्राज्यवादीहरूकै अगुवाई गरेको हुन्छ । आजको अमेरीका प्रभुत्व वादी शक्तिको केन्द्र विन्दु रहेको छ ।

## १३५. प्रति क्रान्ति :—

क्रान्तिको ठीक उल्टो, जनवादी देशभक्त र प्रगतिशील तत्व र वर्गहका हातबाट प्रतिक्रियावादी वर्ग या तत्वहरुले राजसत्ता खोस्नुलाई प्रतिक्रान्ति भनिन्छ ।

## १३६. पितृ सत्ता :—

मानव समाजले खेतीपातीको युगका साथै दास युगमा प्रवेश गरे पछि पुरानो समूह विवाह टुट्दै गई क्रमश:जोडी विवाह (युग्म विवाह) को चलन आएपछि सन्तानले वाबुलाई चिन्न थाले त्याहाँ देखि समाजमा पुरूषको हैकम बढ्न थाल्यो, नारीहरू रूषका अधीन हुंदै गए । त्यही पुरुषको हैकमलाई पितृस्ता भनिन्छ । दासयुग, शामन्तवाद र पूंजीवाद भरी पितृसत्ता बलियो रहन्छ, समाजवादी समाज कायम भएपछि त्यहाँ नारी र पुरुषको समान स्वतन्त्रता हुने हुनाले कसैको विशेष सत्ता र हैकम रहने छैन ।

## १३७. परिवार :—

वंश र रक्तसम्बन्धमा आधारित मानव समुदायको सानो सानो एकाईलाई

वार भनिन्छ । आदिम कालदेखि अहिले सम्म जम्मा चारवटा परिवारका रूप देखापरेका छन् । जसमा रक्त सम्वद्ध परिवार, वंश सम्वन्ध परिवार युग्म परिवार र एकनिष्ट परिवार विभिन्न युग र चरणका परिवार मा परिवारिक सम्बन्ध भिन्ना भिन्नै देखिन्छ । यसरी परिवारको आकार र विकासमा मुख्य भूमिका आर्थिक उत्पादन सम्बन्ध र निश्चित यौन सम्वन्धले खेलेको हुन्छ । एउटा निश्चित मानिसको झुण्डले आफ्नो वंशको पैतृक सम्पत्ति वा उत्पादन का साधनमा उत्तराधिकार राख्दछ । यसको साथै निश्चित यौन सम्वधमा बाँधिएको हुन्छ । यस्तो स्थितिमा परिवर्तन आउने बित्तिकै पुरानो परिवार टुटने र नयाँ परिवारको गठन हुन्छ ।

## १३८ प्रतिक्रियावादः–

क्रान्ति, प्रगति र वैज्ञानिक विचारधारा विरोधी सबै विचार सिद्धान्त-लाई प्रतिक्रियावाद भनिन्छ । प्रतिक्रियावादका समर्थकलाई प्रतिक्रियावादी भनिन्छ ।

## १३९. पराभौतिकवाद :–

भौतिकवादी दर्शनको विपरीत अध्यात्मवादी दार्शनिक अवधारणा जस अनुसार संसार सबै वस्तु भौतिक वस्तुहरु भन्दा अदृश्यशक्ति द्वारा नियन्त्रीत र सञ्चालित छ भन्ने मान्यता छ। भौतिक वस्तुको अस्तित्वलाई स्वीकार गर्ने तर त्यस्को गति र परिवर्तनलाई अदृस्य शक्तिको करामत देख्दछ।

## १४० प्रगतिवाद :–

प्रकृति, प्राणीहरू र मानव समाज परिवर्तनशील छन् । तिनिहरू सरलबाट जटिलतिर, तल्लो अवस्थाबाट माथिल्लोतिर विकसित हुदै छन् र यिनको अझ धेरै विकास भएर जानेछ भन्ने सिद्धान्तलाई प्रगतिवाद भनिन्छ। प्रकृति, प्राणी र समाजको विकासमा एक अवस्था सम्ममात्राको विकास हुदै रहन्छ मात्रा थपिदैं गई एक निश्चित विन्दुमा पुगेपछि त्यसको गुणनै परिवर्तन हुन्छ । यसलाई गुणात्मक विकास भनिन्छ। शुरूमा यो पृथ्वी बन्दा यसमा यति राम्रा नदी नाला रुख रूखपात र प्राणीहरु थिएनन् ती पछि विकसित भएका हुन् । जीव जन्तु पनि पहिले पानीका किरा गड्यौला आदि जस्ता तल्लो अवस्थामा थिए । तिनबाट फेरिदै विकसित हुंदै आयका जस्ता उड्ने चरा र चैतनशील मानिस जस्ता अवस्थामा आईपुगेका हुन् । मानव समाज पनि जङ्गली अवस्थादेखि फेरिदै विकसित हुंदै आजको अवस्थामा आइपुगेको हो र अझ विकसित भइ साम्यवाद सम्म पुग्ने छ ।

## १४१ पूंजीवाद :-

व्यक्तिगत पूँजीबाट देशका धेरैंजसो उद्योग धन्दा वन्द व्यापार र अन्य व्यवसाय हरु चलाउने र मुख्य रूपमा तिनै पुँजीपति समूहको स्वार्थ रक्षा गर्नका निम्ति बनेको ऐन कानून, विधिविधान नीति नियम आदिको समूहलाई पूँजीवाद भनिन्छ । पूँजीवाद को राजनैतिक आधार गणतन्त्र, आर्थिक आधार भौतिकवाद यसका विशेषता हुन ।

## १४२. पदार्थ :-

परिणामशील भौतिकवस्तु; निष्क्रिय द्रव्यमान भएको अणु एवं परमाणुको तात्विक समुच्चयलाई पदार्थ भनिन्छ । विज्ञान अनुसार पदार्थका रूप ३ किसिमका हुन्छन् । ठोस, तरल, र ग्याँस । शब्द शास्त्रको नियम अनुसार कुनै पनि वस्तुको परिचय दिने शब्दलाई पदार्थ भनिन्छ ।

## १४३. प्रत्यक्ष :-

प्रमाणहरु मध्ये एउटा । कुनै पनि वस्तु वा विचार धारा लाई सिद्ध गर्न अपनाईने मुख्य साधनहरू मध्ये प्रत्यक्ष प्रमाण एउटा हो । प्रत्यक्ष प्रमाणले नभेट्टाएपछि मात्र अनुमान, आप्तवाक्यहरु द्वारा प्रमाणित गरिन्छ । भौतिक वस्तु संग मानिसका इन्द्रियहरूको सन्निकटता भएर प्राप्त हुने ज्ञानलाई प्रत्यक्ष भनिन्छ । प्रत्यक्ष ज्ञान २ किसिमको हुन्छ । १ निर्विकल्प २ सविकल्प । वस्तुको सामान्य विशेषपना नछुट्टिएको ज्ञानलाई निर्विकल्प प्रत्यक्ष भनिन्छ । जस्तै "त्यो कुनै चीज होला" भन्ने ज्ञान । वस्तुका विशेषता छुट्टिएर भएको ज्ञानलाई सविकल्पज्ञात भनिन्छ ।

## १४४. प्रवृत्ति :-

कुनै पनि घटना वा विचारका विकासमान अवस्था वा त्यसको आम दिशा लाई प्रवृत्ति भनिन्छ । राजनैतिक अर्थमा एककिसिमको कार्य शैली वा विषय वस्तुतिर को गमन, साहित्यमा विचार धारात्मक तथा शैलीगत दिशाबोध रचनाको दृष्टिकोण एवं समस्या एक खाले आदत वा शैली ।

## १४५. प्रतिबद्धता :-

निश्चित वर्ग वा समुदायले राष्ट्रको हितकोप्रतिनिधित्व गर्ने विश्व दृश्टिकोण; दर्शन, राजनिति, कला साहित्यमा आफ्नो स्थिति प्रकट गर्दै निष्ठा व्यक्त गर्नु लाई नै प्रतिवद्धता भनिन्छ । प्रतिवद्धताले वैचारिक संघर्षहरू गरेको हुन्छ माक्सवादी लेनिनवादी विश्व दृष्टिकोण एवं दर्शन; शोषित, उत्पीडित मानवताको उद्धार का लागि सदा सर्वदा प्रतिवद्ध रहेको हुन्छ । यस्तै गरि अन्य दर्शन र धर्म–हरूले पनि आ–आफ्नो स्थिति अनुरूप घोषित लक्षप्रति प्रतिवद्धता जाहेर गरेका हुन्छन् :।

## १४६. प्रतिक्रिया (परिवर्तन) :-

भौतिकवादी दर्शनको मूल परिकल्पना । भौतिक वस्तुको सार्वभौमिक अनुगुण, परिवर्तित प्रक्रियाको पुनरुत्पादनको रूपमा प्रकट हुन्छ अथवा क्रियाको प्रतिविम्वलाई पनि प्रतिक्रिया भनिन्छ । मानव मस्तिष्कमा हुने वस्तुको प्रति-क्रिया ज्ञान वा सचेतनाको रूपमा प्रकट हुन्छ ।

## १४७. परिमाण:—

कुनै वस्तुको वाह्य स्वरूप निर्धारण गर्ने आकार संख्या, तौल, आयतन र विकासको स्तरलाई परिमाण भनिन्छ ।

## १४८. प्रत्ययवाद:—

अध्यात्मिक दर्शनको पश्चिमाली व्याख्या । आत्मा मानसिक चेतना, चिन्तन प्रक्रिया नै भौतिक वस्तुका अस्तित्वको मूल कारण हो । मरेको मानिसलाई कुनै प्रकार वस्तुका अस्तित्वको प्रयोजन रहँदैन । चेतना भएको हुनाले मात्र संसारको अस्तित्व छ भन्ने मान्यतालाई प्रत्ययवाद भनिन्छ । यो प्लेटोको दार्शनिक मान्यता हो ।

## २४९. प्रज्ञा र प्राज्ञिक स्वतन्त्रता:—

सृजनशील बौद्धिकतालाई प्रज्ञा भनिन्छ । वुद्धिजीवी समूदायले आफूले देखे वुझेका सम्पूर्ण कुराहरूलाई निर्वाध रुपमा अभिव्यक्त गर्न पाउने स्वतन्त्रता-लाई प्राज्ञिक स्वतन्त्रता भनिन्छ ।

## २५०. प्रयोजनवाद:—

संसारको प्रत्येक संरचना परिघटना कसैले ( ईश्वरले ) खास उद्देश्य पूरा गर्न चलाएको हुन्छ भन्ने किसिमको विचारलाई प्रयोजनवाद भनिन्छ ।

## १५२. पञ्चायती व्यवस्था:—

" शोषण रहीत समाजको सिर्जना " यस्तो मुल प्रस्थापना भएको तर व्यवहारमा ठीक उल्टो आचरण देखिने नेपाली समाजको करीब तीन दशक सम्म प्रचलित राजनैतिक व्यवस्था नै पञ्चायती व्यवस्था हो । यसको दार्शनिक प्रस्थापना अध्यात्मवादी र व्यक्तिवादी रह्यो । साहित्य कला र संस्कृति चरम व्यक्तिवादी हुनु; आर्थिक क्षेत्रमा अर्ध सामन्ती अर्ध औपनिवशक उत्पादन प्रणाली विद्यमान रहनु; सामाजिक क्षेत्रमा शोषण एवं जातीय भेदभाव आदिले ग्रस्त रह्यो ।

## १५२. पञ्चशील:—

बौद्धमार्गीहरूले अपनाउने आचार संहिता जसमा १. चोरी नगर्नु, २. झुट्टा नबोल्नु, ३. अर्काको निन्दा चर्चा नगर्नु, ४. अर्काको हिंसा नगर्नु ५. आत्म संयमी भएर बस्नुलाई पञ्चशील भनिन्थ्यो। राजनैतिक अर्थमा पञ्चशीलको सूत्रपात सन् १९५५ को बाङ्डुङ् सम्मेलनमा चीनका प्रधान मन्त्री चाउएन लाईले पञ्चशीलको प्रस्थापना अगाडि सार्नु भयो। जसमा भिन्दा भिन्दै समाज व्यवस्था भएका देशहरू पनि १. अनाक्रमण, २. अहस्तक्षेप ३. परस्पर लाभ, ४, सार्वभौमिकताको सम्मान ५. समानतालाई पञ्चशीलका आधारमा मैत्री एवं विकासका लागि अगाडि बढ्न सक्छन् भन्ने मान्यताको निरुपण भयो। आज संसार भरि कैयौं राष्ट्रहरू फरक समाज व्यवस्था भएता पनि पञ्चशीलका आधारमा मैत्री कायम गर्दछन्।

## १५३. प्रस्थापना:—

कुनैवस्तुको विषयको अग्रिम प्रस्तुतिकरण, वक्ताले आफ्नो मान्यतालाई अगाडि सार्नु कुनै पनि सैद्धान्तिक मान्यताको पूर्व पक्षलाई प्रस्थापना भनिन्छ।

## १५४ फासिवाद:—

पूंजीवादको सबभन्दा बढी प्रतिक्रियावादी, सब भन्दा बढी साम्राज्य-वादी ( राष्ट्र–राष्ट्र बीच शक्तिको होडलाई समर्थन गर्ने ) सबभन्दा बडी साम्राज्यवादी तथा खुला आतङ्कवादी हुकुमतलाई फाँसीवाद या फासिष्टवाद भनिन्छ। फाँसीवाद सत्तामा आएको एउटा घोर प्रतिक्रियावादी खुला प्रति-शोधको संगठन हो। पूंजी द्वारा मेहनती जनताको सबभन्दा बढी शोषण अनियन्त्रित अन्धराष्ट्रवाद र अन्य मुलुकलाई जीतका लागि युद्ध गर्ने मेहनतकश वर्गको सबभन्दा अधम शत्रु फाँसीवाद हो जसले राम्रो र मीठा नारा लिएर जनतामा पेश हुन्छ र जनतालाई सबभन्दा बढी दमन 'गर्न सफल हुन्छ। दोस्रो विश्व युद्धका इटलीका मुसोलिनी यसका संस्थपक हुन्। अचेल सैन्यबलद्वारा जनताका जनवादी अधिकारहरू खोसी निरंकुश सत्ता चलाउने तानाशाहलाई फासिष्ट भनिन्छ।

"ब"

## १५५. वर्ग:—

समान खालको आर्थिक स्थिति भएको र त्यसबाट समान खालको जीवन बिताउने मानिसको समुदायलाई बर्ग भनिन्छ। जस्तै पूंजीपति वर्ग, सर्वहारा वर्ग, शोषक वर्ग, शोषित वर्ग आदि। परन्तु हाल सम्मका जुनसुकै समाजमा पनि खास गरी शासक र शोषित २ वर्ग पाइएका छन्। यस्ता

वर्गहरू भएको समाजलाई वर्ग समाज भनिन्छ; आदिम साम्यवादी समाजमा वर्ग थिएनन् र वैज्ञानिक साम्यवादी समाजमा पनि वर्गको अस्तित्व मेटिने छ ।

## १५६. वर्ग संघर्ष:—

मानव इतिहासको विकासक्रममा वर्ग उत्पत्ति भएपछि अथवा वर्ग विभाजन भएपछि, यी दुई वर्ग बीचमा संघर्ष हुन्छ, एक वर्ग जित्छ, अर्को हार्छ । अथवा वर्गीय समाजमा वर्ग जिचमा आर्थिक असन्तुलन हुन्छ, भनौं एक वर्ग ऐश आरामको उप्रो थुप्रोमा हुन्छ । अर्को वर्गलाई सामान्य आवश्यकता ा चिजविजबाट पनि बञ्चित गरिन्छ । जुन मान्छेलाई बाच्न, नभइ हुँदैन, जस्ले गर्दा रीस, घृणा, असन्तोष जन्माउछ र यो वर्गले यस्तो परिस्थितिलाई बदलन चाहन्छ परिणाम स्वरुपमा लुटिएका वर्गले, लुटने वर्गको विरूद्ध संघर्ष गर्छ उस्ले दमन गर्छ र झन संघर्ष तेज हुन्छ अन्तमा बहुसख्यक र न्यायको पक्षकाले जित्छन्, समाज पनि एक पाइला अगाडि बढ्छ । यसको नाम वर्ग संघर्ष हो । अझै यसलाई अर्थशास्त्रको सिद्धान्तका आधारमा उत्पादन सम्बन्ध र उत्पादक बीचको मानवीय संघर्षलाई वर्ग संघर्ष भनिन्छ ।

## १५७. विज्ञान:—

कुनैं वस्तु या घटनामा रहेंको कार्य कारण सम्बन्धको सुव्यवस्थित र नियमित ज्ञानलाई विज्ञान भनिन्छ । विज्ञानले व्यवहार द्वारा प्रमाणित नियम र धारणहरु द्वारा विश्वलाई व्याख्यान गर्छ । अर्को शब्दमा विज्ञान भनेको कम समयमा सरलता पूर्वक ठूलाठूला र जटिल समस्या हल गर्ने व्यवहार शिद्ध नियम हो जसको उत्पत्ति व्यवहारबाट हुन्छ, ज्ञानको विश्लेषण र सामन्यीकरण द्वारा प्रयोग र परिक्षण हुन्छ; विज्ञान रूढीवादको कट्टर शत्रु हो, यसको मूल आधार प्रत्यक्ष प्रमाण हो ।

विज्ञानलाई दुई क्षेत्रमा बाँडिएको छ । एक, सामाजिक विज्ञान जस्मा इतिहास, अर्थशास्त्र आदि पर्दछ अर्को प्राकृतिक विज्ञान जसमा भौतिक, रसायन, जीव, गणित, र यान्त्रिशास्त्र पर्दछन् ।

## १५८ बुद्धि :—

व्यवहारिक तथा वैचारिक समस्याको आर्थिक समाधान गर्न सक्ने अन्त चेतनालाई बुद्धि भनिन्छ ।

## १५९ वैज्ञानिक समाजवाद:—

मार्क्सवाद र लेनिनवादले देखाएकोबाटो अनुसार सामन्तवाद' पूंजीवाद र साम्राज्यवादी शोषणका सारा जराहरू उखेलेर सम्पत्ति र उत्पादनका साधनहरू साझा बनाएर सम्पूर्ण जनताको नेतृत्व र अधिनायकत्वमा कायम

गरिने समाजवादी व्यवस्थालाई वैज्ञानिक समाजवाद या सर्वहारा समाजवाद या कम्युनिष्ट समाजवाद भनिन्छ। सर्वहारा समाजवादमा सबैलाई आफ्नो योग्यताको विकास गर्ने समान अवसर दिइन्छ र जसको जस्तो योग्यता छ त्यसै अनुसारको काम दिने र काम अनुसारको दाम दिने ग्यारेण्टी गरिन्छ। त्यहाँ कसैले वेरोजगार रहनु पर्दैन र अर्कोतिर केटा केटी, बूढा-बूडी, रोगी र अशक्त अवस्थमा वाहेक जसले काम गर्दैन त्यसले खान लाउन पनि पाउँदैन। आजभोली यस मान्यता अन्तगत केही नकारात्मक पहलको 'विकास हुन थालेको हुनाले यसवारे व्यापक चर्चा र सूधारका कदमहरू चालिएका छन्। वैज्ञानिक समाजवादमा समाजका श्रमिक वर्गका सयकडा नब्बे पञ्चानब्बे जनतालाई सबै खाले प्रजातान्त्रिक हक दिइन्छ तर शोसक र प्रतिक्रियावादी वर्गका मुठ्ठीभर ब्यक्तिहरूलाई जनताको शोषण गर्ने र उनलाई अलमल्याउने अवैज्ञानिक र फटाहा विचारहरू फैलाउने स्वतन्त्रता ठ्यामै दिइन्न। देश र जनताको हित गर्ने, अन्धविश्वास मेटने, विश्व क्रान्तिलाई अघि वढाउने सही र वैज्ञानिक विचारहरु फैलाउने, सामन्तवाद, पूंजीवाद र साम्राज्यवादका जरा संसारै देखि उखेल्ने उद्देश्यका सबै खाले संगठन खोल्ने, बोल्ने प्रचार गर्ने कुरामा जति चाह्यो त्यति स्वतन्त्रता त्यहाँ पाइन्छ।

## १६०. बहुदलीय व्यवस्था:–

बहुदलीय व्यवस्था भनेको धेरै पार्टी खोल्न पाइने संसदीय व्यवस्था नै हो। खास–खास अवस्थामा कम्युनिष्ट व्यवस्थामा पनि बहुदलीय परिपाटी रहन दिएको पाइन्छ, चीनमा ई. १६४८ मा कम्युनिष्ट क्रान्तिको विजय भै सके पछि पनि नयाँ जनवादी व्यवस्था अन्तर्गत केही समय सम्म देशभक्त र जनवादी पार्टीहरुलाई काम गर्न दिइएको थियो र आजसम्म पनि तिनीहरूका सामान्य संगठन बाँकी छन्। अहिले समाजवादी मुलुकहरूमा बहुदलीय व्यवस्थाको सूत्रपात गर्न खोजीएको छ।

## १६१. विस्तारवाद;–

कुनै देशले आपनो सिमा र प्रभावको विस्तार गर्ने मनसुवा लिएर अरू देशहरूमाथि गर्ने थिचोमिच र लुट खसोटको नीतिलाई विस्तारवाद भनिन्छ। विस्तारवाद निम्न रूपहरुमा अभिव्यक्त हुने गर्छ।
विस्तारवादका लक्षणहरू निम्त प्रकार छन्।
१– अरू देशहरूलाई शस्त्रबलद्वारा कब्जामा ल्याउनु।
२– अरु देशलाई संधै भरि युद्धमा संत्ररत पार्नु।
३– अरू राष्ट्रबाट असमान सन्धि लगाएत विशेष सुविधा माग्नु।

४– जनक्रान्तिलाई दवाउन प्रतिक्रियावादी सत्ताधिकारीलाई उक्साउनु र मदत दिनु ।

५– अर्को परराष्ट्रको भौगोलिक सीमालाई अतिक्रमण गर्नु ।

६– अर्कोका देशमा अन्तरध्वंश मच्चाउनु ।

७– आर्थिक र राजनैतिक रूपमा अ फूनै आश्रित बनाउनु आदि ।

## १६२. वितण्डावाद:–

विपक्षीहरूका मतलाई कुतर्कहरूको आधारमा गलत तरिकाले प्रचार गर्नुलाई वितण्डा भनिन्छ । समाजवादी व्यवस्थाका वारेमा प्रतिक्रियावादीहरूले फैलाएका कुप्रचार " वितण्डा " यस्तो सिद्धान्तलाई वितण्डावाद भनिन्छ ।

## १६३. विदेशी पूंजीपति:—

विदेशमा गई उद्योग, व्यापार, ठेक्का पट्टा आदिमा पूंजी लगानी गर्ने र नाफाको पूंजीलाई आफ्नै देशमा लंजाने पूंजीपतिलाई विदेशी पूंजीपति भनिन्छ । नेपालमा त्यस्तो पूंजी लगानीवाट नेपाली जनताको शोषण गर्ने पश्चिम पूंजीपतिहरू " विदेशी पूंजीपति " हुन् ।

## १६४. संविधान या विधान:–

कुनै राज्यका विभिन्न खाले सामाजिक राजनैतिक संस्थाहरूका कानून नीति र नियमहरूको बाटो देखाउने मूल कानूनलाई सम्विधान भनिन्छ ।

## १६५. विधान सभा या संविधान सभा:—

पुरानो सम्विधानको साटो विलकुल नयाँ सम्विधान बनाउनको निम्ति देशभरीका जनता वर्ग या कुनै संस्थाका साधारण सदस्यहरुबाट चुनिएका प्रतिनिधिहरूको सभालाई विधान सभा या सम्विधान सभा भनिन्छ ।

## १६६. वैधानिक राजतन्त्र :—

जुन देशमा जनताका प्रतिनिधिहरूको सभा ( बिधान सभा ) या ( संसदीय सभा ) द्वारा बनाइएको विधानका दायरामा नियन्त्रीत रहने अर्थात त्यस्ता विधानलाई मानेर चल्ने राजतन्त्र हुन्छ त्यसलाई वैधानिक राजतन्त्र भनिन्छ । वैधानिक राजतन्त्रमा राज्य प्रमूखको ठाडो हुकुम चल्दैन र उसले आफ्नो निजी इच्छाले देशका विधान र कानूनहरू बनाउन, फेर्न, बदल्न र संशोधन गर्न पाउँदैन ।

## १५७. वैधानिक संघर्ष :–

देशमा चलन चल्तीमा रहेका बिधान र ऐन कानूनका सीमा भित्र रहेर आफ्ना हक इज्जतका निम्ति चलाइने संघर्षहरू लाई वैधानिक या

कानूनी संघर्ष भनिन्छ । गरीब किसानले मोहियानी हकको निम्ति कानूनको सहारा लिएर आन्दोलन या मुद्दा मामिला गर्छ भने त्यसलाई वैधानिक संघर्ष भनिन्छ। मजदूरहरूले आफ्नो स्वतन्त्र संगठन बनाउने अधिकार पाएका देशहरूमा उनीहरूले कनूनका सीमा भित्र रही हडताल, धर्ना आदि-बाट आफ्नो ज्याला बोनस बढाउन या अरू सुविधाहरू बढाउन गरिने संघर्ष लाई पनि वैधानिक या कानूनी संघर्ष भनिन्छ।

## १६८. वाद र बिचारधारा:—

वाद सम्पूर्ण सामाजिक आधार र संरचनाको अभिव्यक्ति हो भने विचारधारा भनेको खास वर्गको राजनैतिक हितको अभिव्यक्ति हो। कुनै विचार वा चिन्तनलाई व्यवहारमा लगिन्छ, व्यवहारमा त्यो सही सिद्ध हुन्छ, व्यवहारको मार्गदर्शन बन्छ र ठोस सार्वभौमिक हुन्छ भने त्यसैलाई छोटकरीमा वाद वा सिद्धान्त भन्न सकिन्छ । कुनै विचार वा चिन्तन प्रयोगात्मक स्थितिमा छ र त्यो व्यवहारमा पूर्णतः साबित भएको छैन तर सकारात्मक पक्ष ज्यादा अथवा सफल हुदै गहरहेंको छ भने गुणात्मक परिवर्तन र सार्बभौमिक सच्चाईको रुपमा परिणत नभए सम्म त्यसलाई विचारधारा मात्र भन्न सकिन्छ।

## १६९. बुर्जुवा वर्ग:—

यो पूंजीवादी समाजको शासक वर्ग र अतिरिक्त मूल्यको शोषण कर्ताका साथै सम्पूर्ण उत्पादकका साधनहरूको स्वामीत्व। सामन्तवादी समाजको बिघटनमा यस वर्गको प्रगतिशील भूमिका रह्यो। समानता स्वतन्त्रता भ्रातृत्वको नारा दिएर १६–१९– औं शताब्दी सम्म वुर्जुवा बर्ग शक्ति शाली रह्यों। जसमा राज-नैतिक आर्थिक शासन वलियो थियो। उत्पादन पद्धतिको कारणले सर्बहारा वर्गको अभ्युदय पछि यसको भूमिका प्रतिक्रियावादी बन्न पुग्यो। यसका आद-र्शवादी नारा आफ्नै वर्गको हितका लागि उपयुक्त बने। बूर्जुवा वर्गले आफ्नो बाजारको बिस्तार गर्ने सन्दर्भमा साम्राज्यवादी नीति अपनाउन थाल्यो जसले गर्दा सामाजिक प्रगतिमा बाधक बन्न पुग्यो ।

## १७०. ब्रह्माण्ड:—

अस्तित्वमान् ; भौतिक जगत् जो देशकाल दुवै रूपमा असीम छ, भौतिक वस्तुका अन्त्यहीन विविधताले युक्त छ। हाल मानवीय अन्वेषण र ज्ञानको सीमाले भेट्टाएको ब्रह्माण्डको अस्तित्व १५ करोड प्रकाश वर्ष विशाल छ जुन समग्र ब्रह्माण्डको एकांश मात्र हो।

## १७०. व्यवहार:–

मानवीय अस्तित्वका लागि गरिने नैतिक भौतिक क्रियाकलापको समिष्ट रूपलाई व्यवहार भनिन्छ, जो कुनै पनि अस्तित्वमान् विषयको अनिवार्य शर्त हो।

## १७२. विम्ब:–

मानव चेतनामा पर्ने भौतिक क्रियाकलापको परिणामलाई विम्ब भनिन्छ। यो शब्द खास गरेर साहित्यमा प्रयोग हुन्छ। विम्बको व्यावहारिक रूप मध्ये सकेत, नमूना 'इमेज' आदि पर्दछन्।

"भ"

## १७३. भावना:-

मन मस्तिष्क, आवेग र विवेक अथवा हार्दिकता र बौद्धिकताको संयुक्त प्रतिविम्वलाई भावना भनिन्छ।

## १७४. भौतिकवाद:-

भूतवाद या भौतिकवाद या भूततत्वलाई आदितत्व मान्नु र अध्यात्म-वादको ठीक उल्टो भौतिकवाद हुन्छ। यसले ईश्वर या कुनै सृष्टिबाट जगत र जीवन (विश्व ब्रह्माण्ड) को उत्पत्ति या रचना भएको मान्दैन। यसले भन्दछ:– (क) भौतिक पदार्थ अर्थात् ब्रह्माण्ड को सृष्टि गर्ने मूल पदार्थ अनादि र अनन्त छन्। (ख) पदार्थबाट चेतनाको सृष्टि भएको हो। (ग) भौतिक जगतलाई मानव बुद्धिले बुझ्न सकिन्छ। (घ) सारा भौतिक पदार्थहरू परस्पर विरोधी गुण भएका तत्वहरु मिलेर बनेका हुनाले तिनमा सधैं गति र परिवर्तन भै रहन्छ र पदार्थका गुण र स्वरूपमा परिवर्तन भइ नयाँ तत्वको निर्माण हुन्छ। (ङ) संसार विकासशील छ।

रूख डढ्छ तर त्यसको नाश हुन्न: केवल खरानी विभिन्न थरिका ग्याँसमा परिवर्तन मात्र हुन्छ। यसै गरी नाना रंगको सारा विश्व ब्रह्माण्ड, सूर्य पृथ्वी, ग्रहहरू र यी भित्रका अनेक कुराहरू बन्दै बिग्रँदै र नाश हुँदै फेरिदै रहन्छन्। प्राण र चेतना यिनै भित्रका तत्वको रूपान्तर र विकाश बाट पैदा भएका हुन। वस्तु भित्र क्रियाशील रहने परस्पर विरोधी तत्वको संघर्षबाट नै भौतिक वस्तुको सृजना विकास र विनास भएको छ। यसरी भौतिकवादले अध्यात्मवादको विपरित यसै जगतको प्रामाणिक दृश्यमा विश्वास गर्छ, भाग्यवाद, पुर्वजन्म, परलोक केही मान्दैन ईश्वर पनि मान्दैन। यसरी भौतिक-वादीलाई नास्तिक पनि भनिन्छ; संसारमा भएका विज्ञानका ठुलाठुला खोजहरू ले अध्यात्मवादलाई गलत र भौतिकवादलाई सही सावित गरेकाछन्।

१७५. भद्दा भौतिकवाद:–

भौतिकवादी दर्शनको अति सरलीकृत रूप। चेतना भौतिक वस्तुको उपज हो भन्ने स्वीकार गर्दा गर्दै पनि त्यसको जटिलता र द्वन्द्वात्मक विकासको प्रक्रियालाई अस्वीकार गर्छ। राजनैतिक क्षेत्रमा अराजकतावाद र उग्रवादको रुपमा अभिव्यक्त हुन्छ। सामाजिक क्षेत्रमा मानवीय ज्ञानका अमूल्य निधि र मूल्यवान परम्परागत मान्यताहरूको एकोहोरो विरोध गर्छ। अध्यात्मवादीहरूले विरोध गर्ने भौतिकवाद पनि यस्तै खालको भौतिकवाद हो। उनीहरूको आरोपमा भौतिकवाद भनेको "यावत् जीवेत् सुखं जीवेत् ऋणं कृत्वा घृतं पिवेत्

भस्मीभूतस्य देहस्य पुनरागमनं कुत:॥ यस्तै किसिमको हो।

अर्थ:– मानिस जिन्दगी रहे सम्म ऋणै गरेर भए पनि मोज मज्जा गर्नु पर्छ मरे पछि यो शरीर फेरी फर्कंदैन।

१७६. भूदास प्रथा:–

भूमिपति सामन्तहरूले जमीनमा मानिसहरूलाई दास सरह भएर काम गराउने प्रथालाई भूदास प्रथा भनिन्छ। दास प्रथा भन्दा विकसित र सामन्तवादी युगको संक्रमण कालिन अवस्था भन्न सकिन्छ।

१७७. भूमिगत:-

देश वा समाजमा राजनैतिक स्वतन्त्रता नभएको कारणले प्रचलित शासन सत्ताका विरूद्ध आफ्ना गतिविधिहरुलाई गुप्तरूपमा सञ्चालन गर्नुलाई भूमिगत कार्य प्रणाली भनिन्छ

"म"

२७८: मन:-

मस्तिष्कको उत्कृष्ट क्रियाशक्ति जसले शारीरिक तथा वैचारिक क्रियाकलाप-लाई नियन्त्रण र परिचालन गर्दछ।

१७९. मानिस.-

संसारमा सबभन्दा चेतनशील, सबभन्दा सुविकसित तथा सबभन्दा सुसंगठित प्राणी (जैव पदार्थ) लाई मानिस भनिन्छ। बाहिरी क्रियाकलाप-मा मानिसलाई अरू जनावरबाट छुट्याउने कुरा हो; श्रममा औजारको प्रयोग मानिसले गर्दछ। मानिसले श्रमलाई सरल तुल्याउन औजारहरू निर्माण गर्छ र तिनलाई आवश्यकतानुकूल प्रयोग गर्छ।

२८०. मनोगतवाद:-

कुनै पनि कुरामा द्वन्द्वात्मक भौतिकवादी पद्धति प्रयोग नगरी, देशकाल परिस्थितिको तथ्य ज्ञान नगरी स्वविवेकको निर्णय नै सही ठान्नु

या टापटिपे ज्ञानका आधारमा अड्कलबाजी गर्नु र ठोकुवा निर्णय दिनु मनोगतवाद हो। यस भित्र कट्टरतावाद या कठमुल्लावाद, अनुभववाद, सङ्कीर्णतावाद एकतर्फीपना आदि कुरा आउँछन्।

## २८२. मध्य युगीन अवस्थाः–

यो व्यवस्था खास गरी सामन्तवादी व्यवस्था नै हो। यो अवस्थामा एकातिर ठूला ठूला जमिन्दारहरु र अर्कोतिर अर्धदास किसानहरु हुन्छन्। मध्य युगमा हस्तकला र कारीगरीको पनि बीजारोपण भएको हुन्छ। शासन व्यवस्था ठूला ठूला सामन्त महासामन्तहरुको हातमा हुन्छ। कुनै निश्चित संविधान कानून र खास नियम भित्र रहेर शासन चलाइँदैन बरू शासकहरुको हुकुमी र स्वेच्छाचारीता चल्दछ। पश्चिम मध्ययुग छैठौंदेखि १५ शताब्दी सम्मलाई मानिन्छ। पूर्वमा १६ औं शताब्दी सम्मको अवस्था भनिन्छ।

## २८२. मजदूरः-

अर्काको ज्यालादारी गर्ने या ज्याला लिएर आफ्नो श्रमशक्ति बेच्ने व्यक्तिलाई मजदूर भनिन्छ।

## २८३. मालः–

कुनै पनि स्वनिर्मित प्राकृतिक वस्तुहरु तथा मानवको श्रमबाट उत्पादित सामाजिक वस्तुहरू जसमा हाम्रो आवश्यकता पूर्ति गर्ने गुण ( उपयोगिता ) छ र जसको कुनै मालिक छ भने ती वस्तुलाई माल भनिन्छ।

## १८४: मार्क्सवादः-

प्रकृति, समाज, राज्य व्यवस्था आदि बारेमा कार्ल मार्क्स र फ्रेडरिक एंगेलसले महान खोज र प्रयोगद्वारा निकाल्नु भएका वैज्ञानिक क्रान्तिकारी विचार, सिद्धान्त र व्यवहारलाई मार्क्सवाद भनिन्छ।

युरोपमा पूँजीवादको विकास भैरहेको र मजदूर ( सर्वहारा ) वर्ग र पूँजीपति वर्गका बीच संघर्ष चर्कदै गएको परिस्थितिले मार्क्सवादलाई जन्माएको हो। मार्क्सवादले पूँजीपति वर्गको राज्य व्यवस्थालाई ध्वस्त पारी त्यो ठाउँमा सर्वहारा वर्गको राज्य व्यवस्था स्थापना गर्ने सही क्रान्तिकारी बाटो देखाउँछ। यसले सबै थोकको सृष्टि र सञ्चालन ईश्वरले गर्छ भन्ने सृष्टिवादी अध्यात्मवादको पूर्णरूपले खण्डन गरी त्यसका ठाउँमा प्रकृति र समाजको द्वन्द्वात्मक विकासको सिद्धान्त अघि सारेको छ। मार्क्सवादले नै पूँजी श्रम र शोषणको सही सही मूल्यांकन गरी श्रमले नै पूँजी जन्माउँछ र जसले श्रम गर्छ त्यसले नै श्रमको फल पाउनु पर्छ र

गरेको श्रम लुटेर बाँच्ने पूँजीवाद र सामन्तवादलाई पल्टाई वैज्ञानिक समाजवाद स्थापना गर्नु पर्छ भन्ने सही विचार र क्रान्तिको सही पद्धति सर्वहारा वर्ग लाई दिएको छ। यसका मौलिक विशेषताहरू द्वन्द्वात्मक भौतिकवाद, ऐतिहासिक भौतिकवाद वर्ग संघर्ष, अतिरिक्त मूल्यको सिद्धान्त तल्लो वर्गका जनतामा राज्य को शक्ति आदि कुरा हुन्।

## १८५. मातृसत्ता:-

पुरानो जंगली जमानामा अलग जोडीका बीच विवाह नभई सामूहिक विवाह हुन्थ्यो। त्यसैले त्यहाँ सन्तानले आफ्ना आमालाई मात्र चिन्न सक्थे र बाबूलाई चिन्न सक्तैन थे। यस्तो स्थितिले गर्दा आफ्ना शाखा सन्तान (गोत्र) मा आमाको प्रभाव बढी हुन्थ्यो र तत्कालीन गण समाजमा स्वभाव मा नारी जातिको बोलवाला हुन्थ्यो। यसरी समाजमा रहेको नारी जातिको बोलवालालाई मातृसत्ता (आमाको विशेषाधिकार) भनिन्छ। अचेल भारतका खासी, थारू आदि जातिमा पनि मातृसत्ताको शेषसास छ। त्यहाँ लोग्ने स्वास्नी कहाँ गई बस्नु पर्छ, स्वास्नीले चाहेमा लोग्नेलाई निकाली अर्को ल्याउन सक्छे।

## १८६. माओत्सेतुङ् बिचारधारा:-

मार्क्सवाद र लेनिनवादका आधारमा अर्ध सामन्ती र अर्ध उपनिवेशी देशहरूमा सर्वहारा वर्गका नेतृत्वमा पूँजीवादी जनवादी क्रान्ति पूरा गरी समाजवादको पृष्ठभूमि तयार पार्ने र फेरिएको विश्व परिस्थिति अनुसार मार्क्सवाद लेनिनवादको सही व्याख्या गर्ने एवम् त्यसमा धेरै नयाँ कुराहरू समेत थपेर सृजनात्मक विकास गर्ने र चीनको कम्युनिष्ट पार्टीका अध्यक्ष माओत्सेतुङ्का विचार सिद्धान्त र व्यवहारलाई माओत्सेतुङ् विचारधारा भनिन्छ।

माओत्सेतुङ्ले कृषि प्रधान, अर्ध सामन्ती, अर्ध उपनिवेशी देशहरुमा सर्वहारा वर्गले कसरी पूँजीवादी जनवादी क्रान्ति पूरा गरेर समाजवाद तिर बढनु पर्छ भनी लेनिनले संक्षिप्त रूपमा देखाउनु भएको गोरेटोलाई फैलाएर फराकिलो पारी चीन जस्तो विशाल देशमा त्यसै अनुसार क्रान्ति पूरा गर्नु भयो। अर्थात् सर्वहारा वर्गको नेतृत्वमा हुने पूँजीवादी जनवादी क्रान्ति (नयाँ जनवादी क्रान्ति) को पूरा व्याख्या र सफल प्रयोग गर्नु भयो र त्यस दौरान आएका सम्पूर्ण नयाँ समस्याहरू (विश्लेषण, संयुक्त मोर्चा, गाउँमा कृषि क्रान्ति चलाएर शहर बजार घेर्दै अन्तमा केन्द्र कब्जा गर्ने आदिको सही सही हल निकाल्नु भयो।

## १८७. मूढाग्रहः—

आफ्नो अवैज्ञानिक मान्यता र चिन्तनमा मूर्खतापूर्ण तरिकाले अड्डी लिनुलाई मूढाग्रह भनिन्छ। प्रचलित अर्थमा "मेरै गोरुका बाह्र टक्का" भने जस्तै हो।

## १८८. मण्डलेः—

हाल विघटित तानाशाही पञ्चायती व्यवस्थाद्वारा तथा खास अर्थमा दरबार बाटै आफ्नो निरंकुश सत्ता टिकाउन प्रयोगमा ल्याइने पालित पोषित हुल्याहा, छुल्याहा, र तस्करी तन्त्रका सहयोगी भ्रष्ट तत्वहरुको समुदायलाई मण्डले भनेर चिनिन्छ। मण्डलेहरूको क्रियाकलापले समकालिन समाजमा विकृतिपूर्ण स्थिति सृजना गरेको हुदा मण्डले एउटा गालीको पर्याय बनेको छ तानाशाही पञ्चायती व्यवस्थाको समर्थन गर्ने जन विरोधी 'गुण्डा' युवा जमातको रुपमा विकसित हुँदै राष्ट्रवादी स्वतन्त्र विद्यार्थी मण्डलको रुप लिएको। २०३६ सालको विद्यार्थी आन्दोलन पछि यसमाथि प्रतिबन्ध लगाई यतापनि कतिपय भ्रष्ट एवं अनुदारवादी पञ्चहरुले यसलाई खुला गराउने काममा प्रयत्नशील रहेका थिए। जनताबाट ज्यादै नाङ्गिएको मण्डले जमातले हाल तानाशाही पंचायती व्यवस्थाको विघटन भएर प्रजातान्त्रिक वातावरणको सृजना हुन थालेको वर्तमान अवस्थामा पनि गुण्डागर्दी जस्ता घृणित काममा आफूलाई संलग्न गराउँदै आएको कुरा सर्वविदित छ।

## १८९. मास्को घोषणापत्रः—

सन् १९५७ र १९६० मा ( ८१ देशका ) कम्युनिष्ट पार्टीहरुले अन्तर्राष्ट्रिय कम्युनिष्ट आन्दोलनमा देखा परेकाविवादहरू समाधान गर्न मास्कोमा भएको सम्मेलनबाट एउटा घोषणापत्र जारी गरेका थिए। यसै दस्तावेजलाई मास्को घोषणा पत्र भनिन्छ। पछि यही घोषणा पत्रको व्याख्या गर्ने सवाललाई लिएर रूस र चीनमा विवाद सिर्जना भयो। २०–२५ वर्ष सम्मको लामो विवाद पछि पूनः एक पटक फेरी समाधानका बाटाहरु देखा परेका छन्।

### "य"

## १९०. युगः—

एकै प्रकारका उत्पादन साधनहरू, उत्पादक शक्ति र उत्पादन सम्बन्ध कायम भएको समयको अन्तराललाई युग भनिन्छ- जस्तै :- सामन्ती युग, पूँजीवादी युग, समाजवादी युग आदि।

## १९२. यान्त्रिक भौतिकवादः—

सारा विश्व ब्रह्माण्ड र जीवजगत लगायत व्यवहारिक हरेक कुरालाई यन्त्र या मेशिनको गति र गुण संग दाँजेर व्याख्या गर्ने सिद्धान्तलाई यान्त्रिक भौतिकवाद भन्दछन्। चिन्तनका क्षेत्रमा यो सिद्धान्त

पहिले देखि नै थियो ता पनि आधुनिक यन्त्र विज्ञानको विकास हुनाको साथ साथै यसको पनि बोलवाला बढ्दै गयो। पहिलो अध्यात्मवादीहरूले जे कुरामा पनि ईश्वरको हात रहेको कुरा बताउँथे। उनीहरूका अनुसार मानिसका आँखा झिम्कनु, रूखका पात हल्लिनु जस्ता साधारण कुरा पनि ईश्वरले चलाई रहेको हुन्छ र उसको इच्छा विना केही हुन सक्दैन। भौतिकवादीहरूले आ-आफ्ना समयका बुद्धि र विज्ञानले भेटेसम्म अध्यात्मवादका सबै ईश्वर-वादी तर्कहरूको खण्डन गर्दै आफ्ना विचारलाई अघि बढाउँदै आएका थिए। आधुनिक कलपूर्जा र मेशिनको विकासले उनीहरूको विकासलाई अझै बल मिल्यो। बाफ, ग्याँस, या बिजुली जस्ता शक्तिसंग जोडदिएपछि मेशिन आफै चल्न थाल्दछ र त्यसले सामानहरू पनि आफै उत्पादन गर्न थाल्दछ। यसले दुई कुरा साबित भयो।

१– बाफ, ग्याँस र विजुली जस्ता शक्तिले यन्त्रहरू चलाउन सक्छन् भन्ने विश्व ब्रह्माण्डलाई पनि भौतिक शक्तिले चलाउन सक्छ।

२– पहिले संसारमा नभएका मेशिन, कल-कारखाना आदि मानिसले बनाउन सक्यो भने ईश्वरले नगरी केही हुँदैन भन्ने कुरा झुट्टा हो।

तर मेशिनको गति सदा एकनासको नै हुन्छ र उसले सधैं नै एकै खालका सामान मात्र उत्पादन गर्दछ। यसतर्फबाट यान्त्रिक भौतिकवादीहरू-के निचोडमा पुगे भने यो विश्वरूपी मेशिन पनि सधैं एक निश्चित गतिमा मात्र हिंडिरहन्छ र प्राणीरूपी मेशिनले पनि सबै आफै जस्ता सन्तान मात्र जन्माउन सक्छ। यस सिद्धान्तलाई मान्नेहरूले विश्व ब्रह्माण्ड यान्त्रिक गतिमा मात्र सीमित नरही आफै बदलिंदै र नयाँ-नयाँ रुपमा विकसित हुँदै जान सक्छ भन्ने कुरालाई ठम्याउन सकेनन् र जीव जगतका सन्तान दर सन्तान पनि सदा जस्ताको तस्तै फेरिंदै विकसित हुँदै एक खालको जातिबाट अर्को खालको जातिमा समेत रूपान्तरित हुन सक्छन् भन्ने कुरा पनि बुझ्न सकेनन्। अन्तमा मानिसले दम दिएर घडी चलाए जस्ले यो विश्व ब्रह्माण्डलाई पनि दम दिएर चलाउने शक्ति भौतिक जगत भन्दा बाहिरकै शक्ति अर्थात् ईश्वर नै हुनुपर्छ भन्ने निष्कर्ष निकाले। अध्यात्मवादकै खाल्टोमा यसको पतन भयो। यसरी पतन गराउनमा पूंजीपति वर्गको स्वार्थको ठूलो हात छ। जबसम्म सामन्तवाद-को विरूद्ध पूंजीपति वर्ग क्रान्तिकारी थियो तबसम्म उसले भौतिकवादको यान्त्रिक ढङ्गले व्याख्या गरे तापनि त्यसलाई सामन्तवादका विरूद्ध क्रान्तिकारी उद्देश्यमा प्रयोग गर्थ्यो। जब पूंजीवादका विरूद्ध सर्वहारा वर्ग उठ्न थाल्यो र उसले यान्त्रिक भौतिकवादको खण्डन गरी द्वन्द्वात्मक भौतिकवादको व्याख्या गर्न

थाल्यो । तब पूंयीपति वर्गले पनि सर्वहारा वर्गका विरूद्ध सामन्त वर्गसँग सम्झौता गर्न थाल्यो र यान्त्रिक भौतिकवादलाई पनि आध्यात्मवादसङ्ग गाँस्न पुग्यो। आज यान्त्रिक भौतिकवद प्रतिक्रियावादी वर्गको दर्शन बनको छ ।

१६२. यथास्थिनिवादः—

पुरानो समाज व्यवस्थामा कुनै परिवर्तन नगरी बढिमा नाम मात्रका सुधार गरेर जस्ताको तस्तै कायम राख्न लाउने विचारलाई यथास्थितिवाद (जस्ताको तस्तै राख्ने सिद्धान्त) भनिन्छ ।

१०३. राजनीतिः—

राज्यसत्तामा हिस्सा लिने, त्यसलाई खोस्ने या परिचालन गर्ने सवाल-सँग गाँसिएका बिचार, सिद्धान्त, लाईन, रणनीति, कार्यनीति आदिको कूल जोडलाई राजनीति भनिन्छ । सामन्त दलाल र नोकरशाह पूंजी-पति वर्गहरूले आफ्नो हातमा रहेको राज्यसत्ता थाम्न र चलाइराख्न जे जे उपायहरू गर्छन् यो उनीहरूको राजनीति हो। क्रान्तिकारीहरूले जन विरोधी सत्ताधारीहरूबाट राज्यसत्ता खोस्न र शोषक वर्गको विरुद्ध एवं जनताका हितको पक्षमा त्यसको प्रयोग गर्न जे जे उपायहरू गर्दछन् त्यो उनीहरूको राजनीति हो ।

१६४, राज्य व्यवस्थाः—

एउटा वर्गले अर्को वर्गलाई दवाउने हतियारको रूपमा प्रयोग गरिने सम्पूर्ण यन्त्रको यौगिक रूपलाई राज्य यंत्र भनिन्छ । राजनीतिलाई जीवनका हरेक क्षेत्रमा लागु गर्न संगठित शक्तिको आवश्यकता पर्छ । समाज वर्गमा विभाजित रहुन्जेल राज्यव्यवस्था पनि वर्गीय नै हुन्छ। राज्य व्यवस्थाको इतिहासलाई हेर्दा संसारमा आजसम्म राजतन्त्रात्मक सामन्त-वादी राज्य व्यवस्था, संसदीय पूँजीवादी राज्य व्यवस्था, सामन्तवाद साम्राज्य-वाद विरोधी, नौंलो जनवादी राज्य व्यवस्था र समाजवादी राज्य व्यवस्था नै देखिन्छन् ।

१६५. राज्यका रूपः—

खास एउटा कुल तथा बंशको एउटा व्यक्तिद्वारा राज्य सञ्चालन निरंकुश राज्यतन्त्रात्मक राज्यको रुप, संविधान भित्र राजा समेतले बाँधिएर जनप्रतिनिधिसँग संयुक्त भएर राज्य सञ्चालन गर्ने वैधानिक राजतन्त्रात्मक रूप, आम जनताबाट चुनिएर आएका प्रतिनिधिहरूद्वारा सञ्चालित गणतन्त्रात्मक राज्यको रूप र सैनिक बलको आधारमा संचालित सैनिक शासन (मार्शल ल) को

रूप गरी जम्मा चारवटा राज्यका रूप हुन्छन्।

## १९६: राज्यसत्ता:—

एउटा वर्गले अर्को वर्गलाई थिचि राख्ने उद्देश्यले कायम गरिएको राज्यको राजनैतिक आर्थिक साँस्कृतिक र सैनिक यन्त्र र संरचनालाई राज्य सत्ता भनिन्छ। यसले आफूलाई समाज भन्दा माथिल्लो शक्तिका रूपमा जेल, अड्डा–अदालत ( सेना र प्रहरी ) द्वारा राख्दछ र उत्पादनको ढाँचालाई आफ्नो वर्गको अनुकूल बनाउँछ।

## १९७. राष्ट्र:—

एकै खालको भाषा, संस्कृति र अर्थ व्यवस्थामा बाँधिएको विभिन्न वर्गहरूको समूहलाई राष्ट्र भनिन्छ। राष्ट्रलाई जाति पनि भन्दछन्। यसरी हेर्दा मगर, गुरूङ्ग, राई, लिम्बु आदिलाई अलग–अलग जाति या राष्ट्र मान्न सकिन्छ। नेपालमा बस्ने मगर, गुरूङ्ग, नेवार, तामाङ्ग, राई, लिम्बु, थारू, बाजी, बाहुन, क्षेत्री, कामी, दमै, सार्की आदि सबै जात जातिको सिंगो समूहलाई नेपाल राष्ट्र भनिन्छ।

## १९८, राष्ट्रिय पूंजीपति

विदेशी पूँजीपतिको शोषणबाट देशलाई बचाउने खालका उद्योग खोल्ने र व्यापार गर्ने व्यक्तिलाई राष्ट्रिय पुंजीपति भनिन्छ। आधुनिक उद्योगलाई परिचालन गर्न चाहने सम्पन्न व्यक्तिलाई पनि राष्ट्रिय पूँजीपति भनिन्छ।

नेपालमा नेपालकै पूंजी, श्रम र कच्चा पदार्थबाट उद्योग धन्दा खोल्नाले र तिनबाट उब्जेका माल-सामानको व्यापार देश विदेशमा बढाउनाले नै विदेशी पूँजीपतिको शोषण कम हुन थाल्छ र देशको विकास शुरू हुन्छ। यस्तो कार्यमा लागेका पूँजीपति हाम्रो देशका राष्ट्रिय पंजीपति हुन्। नेपाल जस्तो अर्ध - उपनिबेशी देशमा राष्ट्रिय पूँजीपतिलाई मध्यम पूँजीपति पनि भनिन्छ।

## १९९. राष्ट्रियता:—

हामीं सबै नेपाली हौं नेपाल हामी सबैको साझा हो। हामी सबले यसको रक्षा गर्नु पर्छ र सबै कुराले सम्पन्न एवं शक्तिशाली बनाउन पर्छ। आफ्नो देशका भाषा, साहित्य, कला, संस्कृति र परम्पराका असल कुराहरू-को विकास गर्नू पर्दछ भन्ने भावनालाई ( नेपाली ) राष्ट्रियता भनिन्छ।

२००. राष्ट्रवाद;—

मध्ययुगीन सामन्ती निरंकुशताको विरूद्ध समग्र मानिसको राष्ट्रिय स्वतन्त्रताको निम्ति उठेको पूंजीवादी चिन्तनलाई राष्ट्रवाद भनिन्छ।

२०१. राजतन्त्र;—

पुख्यौंली उत्तराधिकारीबाट नै राज्यको सबभन्दा ठूलो ( सर्वोच्च ) शासक बन्ने अधिकार पाउने व्यवस्थालाई राजतन्त्र भनिन्छ। राजतन्त्रमा धेरैजसो राज्यको जेठो छोरो नै राजगद्दीको उत्तराधिकारी बन्न पाउने चलन हुन्छ। जेठो छोरो अन्धा, पागल भएर या अरु कुनै कारणले राजा हुन नसक्ने ठहरेमा या मरेमा माहिलो छोरो गद्दीको उत्तराधिकारी हुन्छ। बेलायत निदरलैण्ड, आदिमा राजाको पहिलो सन्तान ( चाहे त्यो छोरा होस् या छोरी ) नै राजगद्दींको अधिकारी हुन्छ।

२०२. रंगभेदवाद:—

शरीरको रंगविशेषका आधारमा कसैलाई श्रेष्ठ र कसैलाई हीन ठानेर भेदभाव गर्नुलाई रंगभेदवादी नीति भनिन्छ।

२०३- राष्ट्रिय प्रजातन्त्र:—

वैज्ञानिक समाजवादमा ख्रुस्चोभले राष्ट्रिय प्रजातन्त्रको सिद्धान्तलाई जन्म दिएका हुन्। कसैले नयाँ ( जनवाद ) का सट्टामा यसलाई अघि सार्दछन्। यस सिद्धान्तले देशको राष्ट्रिय पूंजीवादी वर्गका नेतृत्वमा पनि प्रजातन्त्र स्थापित हुन सक्छ भन्दै सर्वहारा अधिनायकत्वको विरोध गर्छ, शान्तिपूर्ण उपायले पनि समाजवाद आउन सक्छ भन्ने मान्यता राख्छ। ने० क० पा० ले २०१९ सालको तेश्रो अधिवेशनमा यही कार्यक्रमलाई अगाडि सारेका थियो।

२०४. रहस्यवाद:—

कुनै पनि विषय, वस्तु या घटनामा रहेका भौतिक ( बस्तुगत यथार्थ ) कारणलाई बेवास्ता गरी त्यसका सट्टामा रहस्यमय अभौतिक परिकल्पनाहरू-को सहारा लिने विचारलाई रहस्यवाद भनिन्छ। यसले घटनाको यथार्थलाई नै असत्य सावित गरिदिन्छ। सबैलाई पोल्ने आगोले रामायणको सीता र भागवतको प्रह्लादलाई न पोल्नुको कारण ( सीताको सतीत्व र प्रह्लादको भक्ति भावना हो भन्दछन्; रहस्यवादीहरु। रहस्यवादीका हनुमानले सातकोस को रुप बनाउँछन्, भीमसेनले बाँदरको पुच्छर उचाल्न सक्दैनन, यसमा उनीहरू अभौतिक शक्तिको वकालत गर्दछन्।

राजनीतिमा पनि केही मानिसहरू वस्तुगत तयारी नगरी रहस्यवादी तरीकाद्वारा क्रान्ति सम्पन्न हुने सपना देख्दछन् ।

२०५. रूढीवादी:—

नयाँ देशकाल परिस्थितिको ख्यालै नराखी पुरानै रीति रिवाज, विचार सिद्धान्त र व्यवस्थालाई आँखा चिम्लेर स्वीकार र समर्थन गर्दै जाने विचार-लाई रूढीवाद भनिन्छ ।

२०६. रणनीति:—

खास युगका पुराना उत्पादक शक्तिहरूको बदलामा नयाँ गतिशील उत्पादक शक्तिले भूमिका खेल्ने समकालिन अवस्थाको सापेक्ष कार्यक्रमलाई रणनीति भनिन्छ ।

"श"

२०७. शक्ति:—

वस्तुमा रहने आन्तरिक गुण अथवा संगठित मानव समुदायको संघर्ष-शील मानसिक उर्जालाई शक्ति भनिन्छ ।

२०८. शासन—प्रशासन:—

सिगै देशभरी एउटा नीति र राजनैतिक कार्यक्रम बनाएर जनतालाई शासन गर्ने कामलाई शासन भनिन्छ । शासन दुई खाले हुन्छन् एउटा हो प्रतिक्रियावादी तत्वहरूले जनतालाई गरिने शासन र अर्को हो जनताको संग-ठित शक्तिले प्रतिक्रियावादी तत्वहरूमाथि गरिने शासन । शासन गर्न प्राय: चारवटा तत्व चाहिन्छन्–राजनैतिक संगठन, फौजी शक्ति, कानून अदालत र जेल । यी शक्ति बिना शासन न त चलाउन सकिन्छ न त टिकाउन नै ।

स्थानीय रुपमा सिंगो शासनलाई स्थानीय परिस्थिति अनुसार व्याख्या गर्ने त्यसलाई लागु गर्ने स–साना इकाईहरुलाई प्रशासन भन्दछन् ।

२०९. शून्यवाद:—

यो अध्यात्मवादी दर्शन कै एउटा हाँगा हो । ईश्वर शून्य हो (खं ब्रह्म-यजुर्वेद) त्यसै शून्यवाद ससारको उत्पत्ति हुन्छ र अन्तमा त्यसै शून्यमा गएर विलाउँछ, त्यसैले संसार झुट्टा हो भन्ने भ्रम हो भन्ने यस वादको मान्यता छ ।

२१०. शिक्षा:—

मानिसले आफ्नो समाज र प्रकृति संगको अटूट व्यवहारद्वारा प्राप्त

अनुभवको निचोडलाई शिक्षा भन्दछन् ।

२११. श्रमः—

प्राकृतिक वस्तुलाई रूपान्तरित गर्ने प्रयत्नलाई श्रम भनिन्छ । जसको विना वस्तु उत्पादन हुनै सक्दैन । कला र सीपमूलक प्रयत्नलाई बौद्धिक श्रम भनिन्छ ।

२१२. शोषण.—

मानिसले गरेका बौद्धिक तथा शारीरिक श्रमको यथार्थ मूल्य प्राप्त नभएर अतिरिक्त मूल्य अर्कैको हस्तगत हुनुलाई शोषण भनिन्छ । अर्थात् गरिएका श्रमको यथोचित मूल्य प्राप्त नहुनु ।

२१३. शान्तिक्षेत्र:-

निश्चित क्षेत्र वा देशले आफ्नो भूमिबाट अरूसग युद्ध नगर्नु र आफ्नो देश वा क्षेत्रमा अर्काको सेना तैनाथ गर्न नदिनु अथवा कुनै प्रकारका युद्धको साधन नबन्ने देश वा क्षेत्रलाई शान्तिक्षेत्र भनिन्छ । शान्तिक्षेत्र कायम भएको देश वा क्षेत्र आम रूपमा विश्वसनीय र सुरक्षित मानिन्छ र देशमा सेनाको आवश्यकता पर्दैन ।

'स'

२१४- समाजः-

उत्पादनका साधन, उत्पादन शक्ति र उत्पादन सम्बन्धले युक्त, निश्चित भूभागमा बसोवास गरेको मानव समुदायलाई समाज भनिन्छ ।

२१५. सभ्यताः—

मानिसका दैनिकका रहन सहनका बाहिरी (औपचारिक) तौर-तरिकालाई सामान्यतया सभ्यता भनिन्छ । सभ्यतालाई जीवन पद्धति या जीवन शैली ( Style ) पनि भन्न सकिन्छ । जीवन शैली उन्नत सुव्यवस्थित र परिमार्जित भएको समाजलाई (सभ्य समाज) भनिन्छ र भद्दा (अव्यवस्थित) अवैज्ञानिक र गिरेको साँस्कृतिक स्तर भएको समाजलाई "असभ्य समाज भनिन्छ ।

२१६. संस्कृतिः—

सभ्यता जीवनका बाहिरी तौरतरिका हो भने संस्कृति आन्तरिक मानसिक, वैचारिक तथा परम्परागत धारणाको नाम हो यदाकदा सभ्यता र सस्कृतिलाई छुट्याउनै नसकिने पनि हुन्छ । आर्थिक वजेटले वा उत्पादनका साधनको विकासले मानव समुदाय या खास वर्गको चिन्तन परि-

पार्टीलाई निर्धारित गर्दछ, राजनीति पनि आर्थिक बनोट कै केन्द्रीय अभिव्यक्ति हो। संस्कृति भनेको खास किसिमको राजनीति र अर्थ व्यवस्थाकै धारणात्मक प्रतिविम्व हो। जो व्यवहारमा खास गरी सभ्यताका रूपमा प्रकट हुन्छ। साहित्य, कला रीतिथिति, आदि संस्कृति कै प्रकट रूप हुन्। संस्कृति देश काल वर्ग सापेक्ष हुन्. जस्तै प्राचीन संस्कृति, भारतीय संस्कृति, पूँजीवादी संस्कृति, सामन्ती संस्कृति, सर्वहारा संस्कृति आदि।

२१७. संस्कार:–

कुनै खास धर्म जाति तथा वर्गका मानव समुदायमा हुने परम्परागत मानसिकता।

२१८. साहित्य:—

रागात्मक शैली र कलात्मक भाषामा व्यक्त गरिने जीवन र जगतको प्रतिविम्वलाई साहित्य भनिन्छ। साहित्य पनि वर्ग सापेक्ष हुन्छ सामन्ती साहित्य धर्म जस्तै उडन्ने र अवास्तव हुन्छ, पूँजीवादी साहित्यमा पूँजीवाद विकृत, नग्नता र कङ्कालको बहुरंगी यथार्थ मात्र हुन्छ, तर सर्वहारा वर्गको शोषित र पीडित जन समूहको पक्षपात गर्ने जनवादी तथा समाजवादी साहित्यमा समाजका बिसङ्गतिको भण्डाफोर यसमा रहेका प्रगतिशील तत्वको गुणगान र भावी परिणाम बारे आशावादी दृष्टिकोणलाई रागात्मक र कलात्मक तुल्याइएको हुन्छ। यो साहित्यले मुठ्ठी भरका मोटाएका वर्गको हित नगरी लेनिनले भन्नु भए जस्तै 'लाखौं' करोडौं श्रमजीवी जनताको, राष्ट्रको फूलहरूको, तिनको शक्तिको र तिनको भविष्यको ……… मानवको क्रान्तिकारी चेतनाको सेवा गर्दछ।

२१९, सुधारवाद:—

पुराना बिचार, सिद्धान्त र समाज व्यवस्थालाई क्रान्तिकारी ढङ्गले जरै देखि बदलेर नयाँ विचार, सिद्धान्त र समाज व्यवस्था कायम नगरी तिनै पुराना कुरालाई भित्री रुपमा ज्यों का त्यों राखी बाहिरी रूपमा थोरथार सुधार गरी काम चलाउन खोज्नुलाई सुधारवाद भनिन्छ।

पुरानो भत्कन लागेको घरलाई टालटुल पारेर एक दुइटा काठहरू फेरेर काम चलाउनु सुधारवाद हो र त्यस घरलाई भत्काएर बिलकुल नयाँ घर बनाउनु क्रान्तिकारी परिवर्तन हो।

२२०. सन्देहवाद—:

कुनै पनि विषयमा वस्तुस्थिति र तथ्यहरुको अध्ययन गरी त्यसको

वास्तविक स्वरुप चिनेर यो यस्तै हो भनेर सही मूल्यांकन गर्न नसकी अधुरो अध्ययनका आधारमा अपुरो विश्लेषण गरी सन्देहजनक निचोड निकाल्नु या कुनै एक प्रकारको कुरालाई जानी जानीं बंग्याउने उद्देश्यले अर्को रुपमा प्रचार गरी सन्देह फैलाउनुलाई सन्देहवाद भनिन्छ।

## २२१. सामन्त:–

धेरै भन्दा धेरै जमीन ओगटेको र आफूले मिहिनेत नगरी कूल अधियाँ ठेक्कामा जमीन लगान गरी आयस्ता कमाउने र नोकर चाकर मजदूर र आसामीहरूको श्रमबाट खेती लगाई उनीहरूको अपार शोषणबाट ऐश आराम गर्नेलाई सामन्त भनिन्छ। हाम्रो तराईका जमिन्दारहरू र पहाडका धेरै जमीन हुने साहुहरू सामन्त हुन्। पुराना इतिहासका चक्रवर्ती सम्राट तथा महाराजाहरु सामन्तहरुका नेता हुन्। तिनका भाई भारदार, नातेदारहरू र ठूला - ठूला हाकिमहरुले देशको ज्यादै धेरै जमीन ओगटेका हुन्छन्। त्यसैले ती सधैं सामन्त हुन्। ती सबैलाई सामन्तवर्ग भनिन्छ। नेपालमा २०२२ साल देखि लागु भएको तथाकथित भूमि सुधारले नामको लागि मात्रै जमिन्दारी प्रथा उन्मुलन गरेको छ वास्तविक व्यवहारमा जमिन्दारी व्यवस्था कायमै छ। त्यसैले सामन्तहरुको अस्तित्व पनि कायमै छ। उही रक्सी अर्को बोतलमा खन्याए जस्तै।

## २२२. सामन्तवाद:—

सामन्त वर्गको हित र स्वार्थ पूरा गर्न बनेका प्रथा, विचार, सिद्धान्त, ऐन, विधान, धर्मकर्म, चालचलन, रीतिरिवाज आदि सबैको कूल जोडलाई सामन्तवाद भनिन्छ। भाग्यवाद, पूर्वजन्मवाद, स्वर्ग नरकका कल्पना आदि पनि यस भित्र पर्दछन्।

## २२३. सामन्ती व्यवस्था:—

सामन्त वर्गको स्वार्थ पूरा गर्न बनेको राज्यतन्त्र, फौज, पुलिस, हाकिमहरुको नोकरशाहीतन्त्र, जमिन्दारी व्यवस्था, गुठी, बिर्ता, बेठी, बेगारी आदिको आधारमा मुठीभरका मानिसले विना मिहिनेत शोषण गर्ने अत्यधिक वहुसंख्यक जनताले तिनै जमिन्दारका जमीनका टुक्राहरू अधियाँ, कुत आदिमा लिएर अथवा तिनीहरु कहाँ हरवा चरवा भएर आधापेट खाएर दुखै दुःखले जीवन गुजारा गर्नुपर्ने व्यवस्थालाई सामन्ती व्यवस्था भनिन्छ। नेपालमा सैकडौं वर्षदेखि सामन्ती व्यवस्था चलेर आयो र वर्तमान अवस्था पनि मुख्य रुपमा सामन्ती शोषणले ग्रस्त छ भन्नुमा अत्युक्ति हुँदैन।

## २२४. सर्वहारा:—

आफुसंग जीविकाको साधन, उत्पादनको साधन केही नभएकोले निरन्तर आफ्नो श्रमशक्ति बेच्न बाध्य भएको आधुनिक उद्योगमा लागेको मजदूरलाई सर्वहारा भनिन्छ।

## २२५: साम्राज्यवाद:—

अरूको देश र राष्ट्रियतालाई मिच्ने, लुटने, चुस्ने, थिच्ने, पिछलग्गु बनाउने या आफ्नो देशमै गाभ्ने नीति र सिद्धान्तलाई साम्राज्यवाद भन्दछन्।

## २२६- सामन्ती साम्राज्यवाद:—

सामन्ती युगमा राजा महाराजाहरुले चलाएको अरूको देशमा हमला गर्ने, लुटने या अर्को देशलाई आफ्नो अधिन पार्ने वा आफैमा मिलाउने गरेको नीति सिद्धान्तलाई सामन्ती साम्राज्यवाद भन्दछन्।

## २२७. साम्प्रदायिकता:—

रङ्ग ( वर्ण ), नश्ल, जाति, धर्म, इलाका आदिका आधारमा गरिने भेदभावको व्यवहारलाई साम्प्रदायिकता भनिन्छ। गोरा र कालाको बीचको भेदभाव, बाहुन र कामी वर्गका बीचको भेद; हिन्दु र मुसलमान जस्तै पहाडिया र मधेशेको भेदलाई साम्प्रदायिकता भनिन्छ। अर्को अर्थमा एउटा धर्म परम्परा र मान्यतामा अगाडि बढन खोज्ने मानवीय पुस्ताको सिल-सिलालाई पनि सम्प्रदायिकता भन्न सकिन्छ। बौद्ध सम्प्रदाय, हिन्दू सम्प्रदाय मुस्लिम सम्प्रदाय आदि।

## २२८. संसदीय व्यवस्था:—

सबै वर्गले राजनैतिक पार्टी खोल्न पाउने व्यवस्थामा संसदमा बहुमत ल्याउने उद्देश्य लिएर धेरै पार्टीहरु आम चुनावमा भाग लिन्छन्। जुन पार्टीले सबभन्दा धेरै ठाउँबाट चुनाव जित्न सक्छ त्यसैले आफ्नो मन्त्री मण्डल ( सरकार ) गठन गर्न पाउँछ। यसरी चुनाव लडेर बहुमत ल्याउने सरकार बनाउने व्यवस्थालाई संसदीय व्यस्था भनिन्छ। यसरी बनेको संसदीय सरकार त्यस देशको विधानमा तोकिए अनुसार चार या पाँच वर्षसम्म चल्दछ र त्यसपछि फेरि त्यस्तै आम चुनाव हुन्छ। त्यसमा बहुमत ल्याउने पार्टीले फेरि अर्को सरकार बनाउँछ। बेलायत, फ्रान्स भारत आदिमा अहिले चलेको व्यवस्था संसदीय व्यवस्था हो।

## २२९. समाजवादी प्रजातन्त्र-—

समाजवादी व्यवस्था भित्र देशका श्रमिक वर्गका बहुसंख्यक जनतालाई अर्थात् देशका पन्चानब्बे प्रतिशत जनताका निम्ति जुन जनवादी अधिकारहरू-को व्यवस्था गरिन्छ; त्यसलाई जनवादी प्रजातन्त्र (समाजवादी जनवाद) भनिन्छ।

## २३०. समाजवाद:—

देशको सारा सम्पत्ति र उत्पादनका साधनहरूलाई कसैको निजी पेवा हुन नदिई सबैका साझा बनाउने र सबैले मिलेर मिहिनेत गरी बाँडी-चुंडी खाने र सबले सबको सुख दु:ख हेर्ने व्यवस्थाका सिद्धान्तलाई समाजवाद भनिन्छ। अहिलेको चीनमा धेरैजसो क्षेत्रमा लागु भएएको छ।

## २३१. श्रेणी समाजवाद:—

अलग–अलग पेशाका वर्गहरूले आ-आफ्नो पेशा समूहको बीच धन सम्पत्ति र उत्पादनका साधनहरू साझा बनाई पेशाको बीचमा छुट्टा छुट्टै ढङ्गले समाजवादी समूहहरू कायम गर्ने विचारलाई श्रेणी (पेशा) समाजवाद भनिन्छ। यस्तो विचार यूरोपमा मार्क्सभन्दा अगाडि आएको थियो तर मार्क्स-वादको उदय पछि यो अवैज्ञानिक बिचार अब कतै छैन।

## २३२. साम्यवाद:-

सर्वहारावर्गको पूर्ण मुक्तिको सिद्धान्तलाई साम्यवाद भनिन्छ। समाज–को सबै क्षेत्रमा पूरा उन्नतिको शिखरमा पुगे पछि जस्तो समाज व्यवस्था को स्थापना हुन्छ, त्यसलाई साम्यवादी व्यवस्था भनिन्छ। समाजमा रहेका सबै मानिसलाई लाउने, खाने, बस्ने, औषधि गर्ने; मनोरंजन गर्ने जस्ता सबै साधनहरू भरपूर रूपमा जति चाह्यो त्यति पाउने अवस्था तयार भएपछि साम्यवाद शुरू हुन्छ।

साम्यवादमा पुग्दा समाजका सबै मानिस पूरा शिक्षित; समझदार बन्दछन् समाजबाट सबै खाले अन्धविश्वास र पछौटे स्वार्थी विचारका जराहरू काटि सकिएका हुन्छन्। मानिस सबै खाले निजी स्वार्थबाट माथि पुगेर सबैले सबैको हेरचाह र उन्नति गर्न सक्ने स्थितिमा पुग्छ। त्यसैले त्यहाँ, सबै खाले कलह, झगडा, युद्ध, मामिला, चोरी, बेईमानी, शोषण आदि खतम हुन्छन्। त्यहाँ वर्गहरू आफैं बिलाएर सकिन्छन् र वर्गीय समाजमा उँभिएको राजसत्ता पनि बेकार हुँदै गएर आफैं बिलाउँदै जान्छ; समाजले आपसी

अनुशासन, विवेक, समझदारी र सामूहिक हितको भावनाले सबै व्यवस्था चलाउन सक्छ ।

२३३. संशोधनवादः—

मार्क्सवाद - लेनिनवादका आधारभूत कुराहरु व्यंग्याएर लुकीछिपी पूँजीवादतिर फर्कन चाहने विचारलाई संशोधनवाद भनिन्छ । जस्तै वर्ग संघर्षको सट्टा वर्ग समन्वयका कुरा मान्नु, क्रान्तिकारी संघर्षको सट्टा शान्तिपूर्ण ( संसदीय ) उपायले नै पूँजीवादी शक्तिलाई हराउन सकिन्छ भन्नु, सर्वहारा अनुशासन नमान्नु आदि । संक्षिप्तमा भन्दा, संशोधनवाद भनेको समाजवाद भित्र घुसेको पूँजीवादी प्रवृत्ति हो ।

२३४. सोशलिष्टः.

'सोशलिष्ट' को अर्थ हो समाजवादी । यस अर्थमा सच्चा सोश-लिष्टहरू कम्युनिष्ट नै हुन् । प्रजातान्त्रिक समाजवादी ( निम्न पूँजीवादी ) हरूले सोशलिष्ट भन्ने चलन चलाएका हुनाले आज भोली सोशलिष्ट शब्दले प्रायः तिनै निम्न पूँजीवादीहरूले लगेका हुन् र लाजै नमानी त्यसलाई आफ्नो भन्न थालेका हुन् । नामका समाजवादी कामका पूँजीवादीहरूले आफू-लाई सोशलिष्ट र आफ्नो पार्टीलाई सोशलिष्ट पार्टी भन्ने गरेको सच्चा सोशलिष्ट (समाजबादी) हरूले आफूलाई (कम्युनिष्ट) र आफ्नो पार्टीलाई कम्युनिष्ट पार्टी भन्न थालेका हुन् ।

२३५. सर्वहारा दृष्टिकोणः-

सर्वहारावादी क्रान्तिकारीहरूले समाज विकासक्रममा घटेका कुनै पनि नयाँ घटनालाई निःशर्त रूपमा समर्थन गर्छन् । त्यसपछि समाज विकास-को निम्ति उत्तरदायी अन्तर्विरोधहरूका पक्ष विपक्षको अध्ययन विश्लेषण गर्दै त्यसका कमजोर र गलत पक्षलाई छुट्याँउँदै अगाडि बढछन् ।

२३६. सापेक्ष, सापेक्षता या सापेक्षतावाद.-

देशकाल परिस्थिति या अरू कुनै कुराको तुलनामा आधारित कुरा-लाई सापेक्ष भनिन्छ । जस्तै कसैलाई 'ठूलो धनी' भन्दाको भन्दा ठूलो धनी भन्ने तुलना हुन्छ । हामीले गर्ने अनेकौं व्यावहारिक कुरामा राम्रो नराम्रो, असल खराब आदि कुरामा प्रायः कुनै अन्तिम सीमाको हद तोकिएको नभै, ती सबै सापेक्षता अर्थात् तुलनामा मात्र आधारित हुन्छन् ।

२३७. सिण्डिकेटः-

यो पूंजीपति वर्गको त्यस्तो संगठन हो जसमा उत्पादित वस्तुको मूल्य

गुण र बजार खरीद-बिक्री बाटै प्रवन्धमा सम्पन्न हुन्छ।

२३८. सार्क:. ( दक्षिण एशियाली क्षेत्रीय सहयोग संगठन )

दक्षिण एशियाली क्षेत्रका देशहरुले यस क्षेत्रको विकास गर्नका निम्ति भनी बनाएको क्षेत्रीय संगठनलाई छोटकरीमा सार्क भनिन्छ। यिनमा नेपाल; भारत; श्रीलंका; पाकिस्तान; बंगलादेश, भूटान; र मालद्विप छन्।

२३९. ह्रासवाद:-

प्रगतिवादको ठीक उल्टा; पहिले सबैकुरा विकसित अवस्थामा थिए; तिनको पछि क्रमशः ह्रास हुँदै आएको भन्ने सिद्धान्तलाई ह्रास भनिन्छ। यस अनुसार पहिले सत्ययुग थियो; सबैतिर राम्रै राम्रो थियो; सबै सुखी थिए तर पछि त्यो कुरा क्रमशः घट्दै गएर त्रेतायुग आयो, अझ घटेर द्वापरयुग आयो; अनि झन घटेर सबै कुरा निख्रँदै गएर नास ( प्रलय ) हुनको निम्ति कलियुग आइ पुगेको हो। त्यसरी नै उनीहरू भन्दछन्–पहिलो ( उस जमानामा ) सबै प्राणी अग्ला र हृष्टपुष्ट थिए; मान्छे पनि दूरदर्शी ( त्रिकाल दर्शी ) थिए तर पछि खिईदै गए; मान्छेको बुद्धि पनि कम हुँदै गयो; सत्ययुगका मान्छे ऋषि मुनि जस्ता, 'समझदार' हुनु र कलियुगका मान्छे 'झगडालु' हुनु ह्रासकै कारणले हो।

यो विज्ञान विरोधी सिद्धान्त हो। सामाजिक विकासका नियम नबुझ्ने, पुराना मान्यताको सती जाने र नयाँ मान्यतालाई स्वीकार्न नसक्ने पुरातन पन्थी-हरूको कोकोहोलो मात्र हो।

२४०. क्षेत्रीय प्रभुत्ववान:-

ठूला साम्राज्यवादीहरूको डरले गर्दा संसार भरिनै आफ्नो प्रभूत्व (हैकम) चलाउने आँट गर्न नसक्ने तर कुनै साम्राज्यवादी शक्तिको काखमा बसेर आफ्नो वरिपरिको क्षेत्रलाई हडप्ने या कुनै न कुनै उपायले आफ्नो बसमा पार्न खोज्ने शक्तिको बिचारलाई क्षेत्रीय प्रभूत्ववाद भनिन्छ।

२४१. ज्ञान:-

मानिसको इच्छा शक्ति देखिन स्वतन्त्र रहेको भौतिक जगत मानिसले लगाएको श्रम र व्यवहारद्वारा मानिसका ज्ञानेन्द्रियका माध्यमले मश्तिष्कमा प्रतिविम्बित भएको जगत र जीवनलाई ज्ञान भनिन्छ। अर्को शब्दमा ज्ञान पदार्थको सबभन्दा सुसंगठित र सुन्दर उपज हो। ज्ञान व्यवहारबाट निष्कन्छ र पुनः व्यवहारमा जान र अघि बढ्न यसले बाटो देखाउँछ।